नेपाल पत्रकार महासंघ बेलायत

# स्मारिका

दशौँ वर्ष विशेष प्रकाशन

जुलाई २०२२




# विशेषांक

CELEBRATING 10 YEARS OF EXCELLENCE




*"We at, A-Star Financial Solutions UK would like to thank you all as our family, friends, clients, and well-wishers for your continuous support and trust. We are grateful to be celebrating our 10 years Milestone of serving our community with you all. We hope that our personal and financial journey will continue to grow.*





**Mortgages & Remortgages**



**Pension & Investments**



**Wills & Estate Planning***



**Insurances**

We also provide a home visit service for your convenience

We do not charge for an initial assessment & planning

Your home may be repossessed if you do not keep up repayments on your mortgage.

*Will writing service is not regulated by the FCA

**HEAD OFFICE**
4th floor, West World, West Gate
London, W5 1DT
Tel. 020 7993 6367, 020 8997 4976

**ASHFORD OFFICE**
Kent Space Building, Wotton Road
Ashford, Kent, TN23 6FL
Tel. 01233 226 223

**CAMBERLEY OFFICE**
14 Leonard Close, Frimley,
Camberley, Surrey, GU16 7EQ
Tel. 01252 268 296

**WOOLWICH OFFICE**
Suite 201a, 2nd Floor Equitable House
7 General Gordon Square,
Woolwich, London, SE18 6FH
Tel. 020 7993 5272



प्रधानमन्त्री

काठमाडौं, नेपाल

## शुभकामना

नेपाल पत्रकार महासंघ बेलायतमा स्थापना भएको दश वर्ष पुरा भएको अवसरमा स्मारिका प्रकाशन गर्न लागेको थाहा पाउँदा मलाई खुशी लागेको छ ।

२०४६ सालमा प्रजातन्त्र बहाली भएपछि नेपालीहरु संसारका विभिन्न देशमा अध्ययन, रोजगारी र पेशा/व्यवशायका लागि विदेश जानेक्रम बढेको हो । विश्वका विभिन्न कुनामा बसोबास गर्ने नेपाली दिदीबहिनी तथा दाजुभाईहरुले नेपाली भाषा, साहित्य र संस्कृतिको जगेर्ना तथा नेपाललाई विश्वमाझ चिनाउन विभिन्न संघ/संस्था मार्फत महत्वपूर्ण भूमिका खेल्दै आउनु भएको छ ।

बेलायतमा रहेर पत्रकार मित्रहरुले महासंघ मार्फत गैरआवासीय नेपालीहरुलाई नेपालसँग जोड्नुका साथै नेपालको प्राकृतिक सौन्दर्यलाई प्रचार-प्रचार गर्न पनि महत्वपूर्ण भूमिका निर्वाह गर्दै आएको मैले सुनेको छु ।

हाम्रो मुलुकसँग दुई शताब्दिभन्दा लामो ऐतिहासिक सम्बन्ध रहेको बेलायत नेपालको एउटा महत्वपूर्ण विकास साझेदार पनि हो । अहिले ठूलो संख्यामा भूतपूर्व गोर्खा सैनिक तथा उहाँहरुका परिवार बेलायतमा बसोबास गरिरहनु भएको छ । उहाँहरुका समस्या तथा मागहरु सम्बन्धित क्षेत्रसम्म पुराउन बेलायतस्थित नेपाली संचारकर्मीहरुले निर्वाह गर्दै आउनु भएको भूमिका प्रशंसनीय छ ।

अन्तमा, नेपाल पत्रकार महासंघ बेलायतले प्रकाशन गर्न लागेको स्मारिकाले नेपालको भाषा, संस्कृति, कलाका साथै यहाँको प्राकृतिक सौन्दर्य चिनाउने सामाग्रीहरु समट्ने छ भन्ने विश्वास गर्दै सफलताको शुभकामना व्यक्त गर्दछु ।

धन्यवाद ।

१५ असार, २०७९

शेरबहादुर देउवा





नेपाली राजदूतावास
EMBASSY OF NEPAL
LONDON,U.K.

**शुभकामना सन्देश**

नेपाल पत्रकार महासंघ बेलायत शाखाले आफ्नो स्थापनाको दशौं बार्षिकोत्सवका अवसरमा विशेषांक प्रकाशन गर्न लागेको जानकारी पाउँदा खुशी लागेको छ । बेलायतमा रहेका विभिन्न अनलाईन तथा छापा पत्रपत्रिकाहरुको अभिभावकको रुपमा रहेको नेपाल पत्रकार महासंघ बेलायत शाखाका सम्पूर्ण पदाधिकारी तथा सदस्यहरुलाई यस सुखद अवसरमा हार्दिक शुभकामना प्रदान गर्दै तथा उहाँहरुको उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।

पत्रकारिता जगत देशको चौथो अंग हो । बेलायतमा रहेका नेपाली नागरिकहरुलाई बेलायत तथा विश्वभरका अन्तर्राष्ट्रिय परिघटनाहरु लगायत नेपाल सम्बन्धी समाचारहरु मार्फत सुसूचित गर्दै आएका पत्रकारहरुले सूचना, समाचार तथा जानकारीका अलावा समाज तथा देशलाई मार्गनिर्देश गर्ने एक पहरेदारका रुपमा समेत आफ्नो भूमिका निभाउँदै आएको पाएको छु । संस्थामा आबद्ध पत्रकारहरुलाई एकताबद्ध गरी आफ्नो मूल्य मान्यतामा रही सूचनाको हकको प्रत्याभूति गर्न नेतृत्वदायी भूमिका निभाउने यस संस्थाले पत्रकारहरुको हकहितको संरक्षण तथा नेपाल लगायत बेलायतमा रहेका पत्रकारहरुका लागि विभिन्न कल्याणकारी कार्यहरु गर्दै आइरहेको मलाई जानकारी छ । आगामी दिनहरुमा महासंघले बेलायतमा रहेका ब्रिटिश पत्रकारितासँग सम्बद्ध संस्था एवं व्यक्तिहरुसँग पनि क्रमश: आफ्नो सम्पर्क र सम्बन्ध बढाउँदै लैजाने छ भन्ने विश्वास लिएको छु ।

यस संस्थाले आफ्नो एक दशक लामो क्रियाशिलता तथा संगठननिक कार्यको माध्यमबाट पत्रकारिता पेशाको धर्म तथा उत्तरदायित्व निर्वाहमा पुऱ्याएको योगदान प्रशंसनीय छ । यस संस्थाले पाठकवर्गलाई महत्वपूर्ण सूचना र जानकारीहरु उपलव्ध गराउनका साथै बेलायतमा नेपाल र नेपालीको परिचय, पहिचान र प्रतिष्ठा बढाउने कार्यमा समेत पुऱ्याएको विशिष्ट योगदानको हार्दिक प्रशंसा गर्दछु र आगामी दिनमा यो संस्था अझै सक्षम एवं सबल हुँदै जाओस् भन्ने हार्दिक शुभकामना पनि दिन चाहन्छु ।

२२ जुन २०२२

ज्ञानचन्द्र आचार्य
राजदूत

EMBASSY OF NEPAL, 12A KENSINGTON PALACE GARDENS, LONDON W8 4QU
Tel: 020 7229 1594, Fax: 020 7792 9861 Email: consular@nepembassy.org.uk



# नेपाल पत्रकार महासंघ

## Federation of Nepali Journalists (FNJ)

केन्द्रीय समिति, सञ्चारग्राम, काठमाडौं, नेपाल

Ref No. :




मिति : २०७९।०३।१०

**शुभकामना**

नेपाल पत्रकार महासंघ बेलायत शाखाले आफ्नो दशौं वार्षिकोत्सवका अवसर पारेर **दशौं वार्षिकोत्सव विशेषाङ्क** प्रकाशन गर्न लागेकोमा अत्यन्त खुसी लागेको छ । यस अवसरमा शाखाका पदाधिकारी एवं आवद्ध सबै सदस्यहरूमा म हार्दिक बधाई ज्ञापन गर्दछु ।

यो **विशेषाङ्कले** नेपाल र नेपालीको प्रतिष्ठा उच्च राख्ने खालका सन्देशमूलक र सूचनामूलक सामग्री प्रवाह गरी बेलायतमा बसोबास गर्ने सबै नेपालीलाई सुसूंचित गराउँदै व्यावसायिक पत्रकारिताको मूल्य र मान्यतालाई उँचो पार्ने कार्यमा योगदान दिने विश्वास लिएको छु ।

साथै, **विशेषाङ्कले** बेलायतमा नेपालको भाषा, संस्कृति र पर्यटकीय क्षेत्रको प्रवर्द्धनमा समेत योगदान पुऱ्याउने विश्वाससहित आफ्नो मातृभूमि र मातृभूमिका पत्रकार र पत्रकारिता क्षेत्रको विकासका लागि पनि योगदान दिन सफल रहोस् भनी हार्दिक शुभकामना व्यक्त गर्दछु ।

...........................

**बिपुल पोखेल**

**अध्यक्ष**

Headquarters, Media Village, Kathmandu, Nepal
Phone: +977-1-4112763 / 4112673, Fax: +977-1-4112785, Email: fnjnepalcentral@gmail.com, URL : www.fnjnepal.org




**सम्पादक**
ध्रुवराज अर्याल

**संयोजक/सम्पादक**
दिनेशकुमार परियार

**सम्पादन सल्लाहकार**
भगीरथ योगी
नवीन पोखरेल
चिरन शर्मा
नरेश खपांगीमगर

**सम्पादन सहयोगी**
प्रमिला लावुङ राई
शिव भण्डारी
नरेन्द्र बस्नेत
खेमराज रानाभाट
मञ्जु भण्डारी खरेल

**व्यवस्थापन**
सबिन्द्रकुमार(एसके)गुरुङ
सुरेन्द्र इङनाम
गोमा राना
नगेन्द्रराज नेम्वाङ
जयराम तामाङ
बम थापा सूर्यबंशी
बाचस्पति रेग्मी
मिलन तमु

**डिजाइन**
चन्द्र प्रजापति
chandrakp2@gmail.com

**प्रकाशक**
नेपाल पत्रकार महासंघ बेलायत
www.fnjuk.org
info@fnjuk.org

# प्रकाशकीय

## बेलायतमा पत्रकार महासंघको दश वर्ष

*बेलायतमा नेपालीहरूको आवादी बढ्दै जाँदा विभिन्न पेशा व्यवसायमा आवद्ध मानिसहरूको पनि आगमन हुन थाल्यो । यसक्रममा नेपालमा पत्रकारिता गरिरहेका पत्रकारहरू पनि बेलायतमा बसोबास गर्न आए । उता बढ्दो आवादीका कारण बेलायतमा नेपाली मिडियाको आवश्यकता पनि टड्कारो बनाउँदै लग्यो । यही दुई कडीका कारण बेलायतमा जम्मा भएका नेपाली पत्रकारहरूको सांगठानिक प्रयासले सन् २०११ जुलाई १० मा साकार रूप पायो र बेलायतका नेपाली पत्रकारहरू नेपाल पत्रकार महासंघको विशाल छातामुनी संगठित हुन सफल भए ।*

*अहिले नेपाल पत्रकार महासंघ बेलायत शाखाले आफ्नो स्थापनाको गौरवपूर्ण दश वर्ष पूरा गरेको छ। शाखाको दशौँ वार्षिकोत्सव गत वर्ष नै हुनुपर्ने भए पनि कोरोना महामारीका कारण सरकारले नै कार्यक्रमहरू गर्न नियन्त्रण गरे पछि सम्भव भएन । त्यसैले शाखाले यस वर्ष सो कार्यक्रमको आयोजना गरी शाखाको यस यात्रामा सहयोग, सल्लाह, मार्गनिर्देशन गर्नुहुने सबैलाई आभार प्रकट गर्ने जमर्को गरेको छ । यस अवसरमा शाखालाई यहाँसम्म ल्याउन महत्वपूर्ण भूमिका खेल्नुहुने सबै महानुभावहरूलाई हार्दिक धन्यवाद व्यक्त गर्दछौँ ।*

*शाखा बेलायतमा रहेका नेपाली पत्रकारहरूलाई संगठित गर्दै उनीहरूको सीप तथा क्षमता अभिवृद्धिको प्रमुख लक्ष्यमा निरन्तर क्रियाशील रहँदै आएको छ। बेलायतमा सञ्चालित नेपाली मिडियालाई गुणस्तरीय र व्यावसायिक बनाउँदै यहाँको नेपाली समुदायको अपेक्षा परिपूर्ति गर्ने दिशामा अघि बढ्ने पनि हाम्रो लक्ष्य छ। पत्रकारिता पेशालाई मर्यादित, स्तरीय बनाउँदै समुदायको अपेक्षा र चाहनालाई पूरा गर्ने दिशामा हामी स्थापना कालदेखि नै उन्मुख छौँ । समुदायसित नजिकबाट अन्तरक्रिया गर्दै राम्रो सम्बन्धको विकास र विस्तारबाट नै प्रवासमा सबै नेपालीहरूलाई सफल र सबल बनाउन सकिन्छ भन्ने हाम्रो बुझाइ छ ।*

*पत्रकारिता र समाजबीच नङ र मासुको जस्तो सम्बन्ध हुनुपर्दछ । समाजलाई प्रजातान्त्रिक, पारदर्शी र जवाफदेही बनाउनमा पत्रकारिताको महत्वपूर्ण भूमिका रहन्छ । त्यस्तै पत्रकारितालाई अघि बढाउन, मिडिया संचालन गर्न र दीगो बनाउन समुदायको साथसहयोग अनिवार्य हुन्छ । यसरी दुई बीचको सहकार्यबाट नै बेलायतमा उन्नत नेपाली समाज बनाउन सकिन्छ ।*

*शाखाले आफ्नो दशौँ वार्षिकोत्सवको सुखद अवसर पारेर विशेष स्मारिका प्रकाशन गर्न लागेको छ । यो स्मारिका नेपाल पत्रकार महासंघ बेलायत शाखा स्थापनाको पृष्ठभूमिदेखि बेलायतमा नेपाली मिडियाको इतिहास र वर्तमान अवस्थासम्म बुझ्न तथा अध्ययन गर्न उपयोगी हुनेछ भन्ने हाम्रो विश्वास छ । साथै यसले महासंघको हालसम्मको कार्यको अभिलेखीकरण पनि पक्कै गर्ने छ ।*

*स्मारिका प्रकाशनको संयोजन गर्नु हुने शाखाका वरिष्ठ उपाध्यक्ष दिनेश परियार, सम्पादनमा सघाउनुहुने महासचिव नरेन्द्र बस्नेत तथा सम्पादन सल्लाहकारको रूपमा सहयोग गर्नुहुने सल्लाहकार भगिरथ योगी, संस्थापक अध्यक्ष नवीन पोखरेल, पूर्व अध्यक्ष चिरन शर्मा र निवर्तमान अध्यक्ष नरेश खपाङ्गीमगरप्रति आभार व्यक्त गर्दछौँ। स्मारिकाको लागि शुभकामना सन्देश उपलब्ध गराइदिनुभएकोमा सम्माननीय प्रधानमन्त्री शेरबहादुर देउवा, बेलायतका लागि नेपाली राजदूत ज्ञानचन्द्र आचार्य र महासंघका केन्द्रीय अध्यक्ष विपुल पोखरेलप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछौँ ।*

*त्यस्तै, स्मारिका डिजाइन गरिदिनुहुने चन्द्रकुमार प्रजापति, भाषा सम्पादक डिल्ली आचार्य, लेख रचना उपलब्ध गराउनुहुने अग्रज एवम् सहकर्मी पत्रकारहरू, शुभकामना एवम् विज्ञापनदाताहरू उपलब्ध गराइदिनुभएकोमा बेलायतमा सामाजिक अभियन्ताहरू, व्यावसायिक प्रतिष्ठानहरू तथा स्मारिका प्रकाशनको क्रममा आ-आफ्नो ठाउँबाट सहयोग पुऱ्याउनुहुने कार्यसमितिका पदाधिकारी, सदस्य एवम् सल्लाहकारहरूलाई पनि शाखाको तर्फबाट हार्दिक धन्यवाद व्यक्त गर्दछौँ ।*



नेपाली मेलामा झांकीमा सहभागी हुँदै शाखाको टीम- सन् २०२१।

# विषयक्रम



## ०८

### यसरी जन्मिएको थियो नेपाल पत्रकार महासंघ बेलायत

■ नवीन पोखरेल

## १०

### पत्रकार महासंघ बेलायत शाखामा बिताएका दश वसन्त

■ चिरन शर्मा

## १३

### बेलायत शाखामा दुई कार्यकाल

■ नरेश खपांगीमगर




# हालसम्मका कार्यकारी समिति

**२०२१- २०२४**

**अध्यक्ष**
ध्रुवराज अर्याल
**वरिष्ठ उपाध्यक्ष**
दिनेशकुमार परियार
**उपाध्यक्ष**
प्रमिला लाबुंग राई
शिव भण्डारी
**महासचिव**
नरेन्द्रकुमार बस्नेत
**सचिव**
मन्जु भण्डारी खरेल
खेमराज रानाभाट
**कोषाध्यक्ष**
सबिन्द्रकुमार(एसके)गुरूङ
**सहकोषाध्यक्ष**
सुरेन्द्र इङनाम
**सदस्य**
गोमा राना
नगेन्द्रराज नेम्वाङ
जयराम तामाङ
मिलन तमु
बाचस्पती रेग्मी
बम थापा सुर्यबंशी
**केन्द्रीय प्रतिनिधि**
विमला सेने
विश्वासदीप तिगेला

**सल्लाहकार**
भगीरथ योगी
नवीन पोखरेल
चिरन शर्मा
नरेश खपांगीमगर
श्याम लुइँटेल
सोनाम छिरिङ्ग शेर्पा
विकलचन्द्र आचार्य
फडिन्द्र भट्टराई
दूतबहादुर पुन
कुशल श्रेष्ठ
लिलामान शेरपुञ्जा
पूर्णबहादुर गुरूङ
नरेश काङमाङ राई
प्रजय शुक्ल
डा. शिव तिवारी
सञ्जयभक्त कँडेल
डा. जगन कार्की
एभरेष्ट गौतम

**संरक्षक**
भगीरथ योगी
नवीन पोखरेल
चिरन शर्मा
नरेश खपांगीमगर
विपिन निरौला
श्याम लुइँटेल
विमला सेने

**२०१८-२०२१**

**अध्यक्ष**
नरेश खपांगीमगर
**वरिष्ठ उपाध्यक्ष**
श्याम लुईंटेल
ध्रुवराज अर्याल
**उपाध्यक्ष**
दिनेशकुमार परियार
लीलामान शेरपुञ्जा
विमला सेने
**महासचिव**
सञ्जयभक्त कँडेल
**उपमहासचिव**
नरेन्द्रकुमार बस्नेत
**सचिव**
शिव भण्डारी
पूर्णबहादुर गुरूङ
जगन कार्की
**कोषाध्यक्ष**
सिद्धार्थविक्रम क्षेत्री
**सहकोषाध्यक्ष**
रोशन राई
**सदस्य**
बमबहादुर थापा
नगेन्द्रराज नेम्वाङ
नरेश काङमाङ राई
सुरेन्द्र इङनाम
तीर्थबहादुर मल्ल
गणेश खड्का
मञ्जु भण्डारी खरेल
विश्वासदिप तिगेला
जीवन सेन
खेमराज रानाभाट

**केन्द्रीय प्रतिनिधि**
जानुका राई
प्रमिला राई
एभरेष्ट गौतम
भावना सुनुवार 'परिस्कृत'
मिलन तमु
सविन्दकुमार(एसके)गुरूङ
प्रजय शुक्ल
नृपेश उप्रेती
मिलन शर्मा
**सल्लाहकार**
भगीरथ योगी
नवीन पोखरेल
चिरन शर्मा
सोनम छिरिङ शेर्पा
हरिकुमार गुरूङ 'काजी'
विपिन निरौला
संगीता मरहट्टा
विकलचन्द्र आचार्य
दूतबहादुर पुन
फडिन्द्र भट्टराई
कुशल श्रेष्ठ

**२०१६-२०१८**

**अध्यक्ष**
नरेश खपांगीमगर
**वरिष्ठ उपाध्यक्ष**
श्याम लुइँटेल
**उपाध्यक्ष**
ध्रुवराज अर्याल
**महासचिव**
लीलामान सर्पुञ्ज
**सचिव**
शिव भण्डारी
**कोषाध्यक्ष**
पूर्ण गुरुङ
**सहकोषाध्यक्ष**
रोशन राई
**सदस्य**
नरेन्द्र बस्नेत
सुजन पराजुली
भावना 'परिस्कृत' सुनुवार
नृपेश उप्रेती
शिव तिवारी
छत्र वनेम
जानुका राई
पुष्पा गुरूङ
**केन्द्रीय प्रतिनिधि**
एभरेष्ट गौतम
प्रमिला राई
प्रकाश केसी
फडिन्द्र भट्टराई
देवेन्द्र खेरेस
दिनेश परियार
देवी गौतम
मिलन तमु
**सल्लाहकार**
भगीरथ योगी
नवीन पोखरेल
चिरन शर्मा
सोनम छिरिङ शेर्पा
केशव भण्डारी
हरिकुमार गुरूङ 'काजी'

**२०१४-२०१६**

**अध्यक्ष**
चिरन शर्मा
**वरिष्ठ उपाध्यक्ष**
नरेश खपांगीमगर
**उपाध्यक्ष**
धर्मराज अधिकारी
**महासचिव**
श्याम लुइँटेल
**सचिव**
लिलामन शेरपुञ्जा
**कोषाध्यक्ष**
देवी गौतम
**सहकोषाध्यक्ष**
देवेन्द्र खेरेस राई
**सदस्य**
नृपेश उप्रेती
राजकुमार थापा
ध्रुवराज अर्याल
शिव तिवारी
छत्र वनेम
किरण लिम्बू
शिव भण्डारी
रमा लामिछाने
**सल्लाहकार**
भगीरथ योगी
नवीन पोखरेल

**२०१२-१४**

**अध्यक्ष**
नवीन पोखरेल
**वरिष्ठ उपाध्यक्ष**
चिरन शर्मा
**उपाध्यक्ष**
दिनेशकुमार परियार
**महासचिव**
नरेश खपांगीमगर
**सचिव**
धर्मराज अधिकारी
**कोषाध्यक्ष**
लीलामान शेरपुञ्जा
**सदस्य**
देवी गौतम
रमा लामिछाने
मिलन शर्मा
ऋषिराज बुढाथोकी
नारायण पौडेल 'गाउँले'
श्याम लुइँटेल
उमेश निरौला

**२०१०-२०१२**

**संयोजक**
नवीन पोखरेल
**उपसंयोजक**
चिरन शर्मा
**सदस्यसचिव**
नरेश खपांगीमगर
**सदस्य**
नारायण भण्डारी
नारायण गाउँले
हरिकुमार गुरूङ (काजी)
मिलन ज्ञवाली
श्याम लुइँटेल
होम परिवाग
रमा लामिछाने
देवी गौतम
इश्वर रिजाल
बालमुकुन्द जोशी
शशी पौडेल
विपिन निरौला
धर्मराज अधिकारी
दिनेशकुमार परियार
प्रविन गुरूङ

# यसरी जन्मिएको थियो नेपाल पत्रकार महासंघ बेलायत

शाखाको पहिलो कार्यसमिति-सन् २०१२ ।


नवीन पोखरेल

**झण्डै** डेढ दशकअघि ५ सेप्टेम्बर २००६ मा विद्यार्थीका रूपमा लण्डन टेक्दा मेरा असंख्य सपना थिए तर बिरानो देश त्यति सहज थिएन । चुनौतीका चाङका अगाडि सम्भवतः सबैभन्दा निरीह भिजा स्ट्याटस ।

नेपाल छँदा आमसञ्चारको विद्यार्थी र मूलधारे पत्रकारिता गरेको केही वर्ष बितेको थियो । आफूले जाने बुझेको यही पत्रकारिता लण्डनमा कसरी निरन्तरता दिन सकिएला भन्ने अन्योलबीच म भौंतारिरहेको थिएँ ।

कृष्णज्वाला देवकोटा (नयाँ पत्रिका दैनिकका संस्थापक प्रधानसम्पादक) ले लण्डनमा युरोपको नेपालीपत्र शुरू गर्नभएको केही महिनामात्र भएको रहेछ । हामी राजधानी दैनिकमा सँगै काम गरेका पूर्व सहकर्मी पनि भयौं । उहाँले मलाई युरोपको नेपालीपत्रमा जिम्मेवारी दिएपछि बेलायतको नेपाली समुदायसँग विस्तारै हिमचिम हुने मौका मिल्यो । सप्ताहान्तमा हुने प्रायः कार्यक्रम छुटेनन् किनकि मेरो पनि नयाँ ठाउँ हेर्ने डुल्ने स्वार्थ थियो । त्यसलगत्तै म कान्तिपुर दैनिकसँग जोडिन पुगें ।

सात समुद्रपार मेरो पत्रकारिताको दायरा झन् फराकिलो हुन थाल्यो । त्यो वेला बेलायतका हरेक समाचार वा फिचर कान्तिपुरमा प्राथमिकताका साथ छापिन्थे । नेपालमा मेरो पत्रकारिता चाल नपाएका मानिसहरूले बेलायत आएपछि पो चिन्न थाले । राम्रो सञ्जाल बन्दै गयो । यही वेला लण्डनमा चिरन शर्मासँग चिनजान भयो । चिरन पनि पत्रकारितामा चासो राख्ने रहेछन् । मलाई जहाँसम्म हेक्का छ, देवकोटा सर र मलाई पत्रिका चलाउन कोठा खोजिदिने झमेला पनि चिरनले बेहोरेका थिए ।

त्यसताका नेपाली टिभी भर्खर सञ्चालनमा आएको थियो । सगरमाथा टाइम्स, लण्डन पोष्ट, चौतारी, नेपालब्रिटेन डटकम लगायत केही पत्रिका फाट्टफुट्ट प्रकाशनमा थिए । त्यो वेला अहिले जस्तो मूलधारमा काम गरेका व्यावसायिक पत्रकार र पत्रपत्रिका थिएनन् तर पत्रकारिता जेनतेन टिकिरहेको थियो ।

विस्तारै अध्ययन वा कामका सिलसिलामा नेपालबाट पत्रकार साथीहरू बेलायत आउन शुरू भएको थियो । एक भेटमा पत्रकार चिरन शर्माले नेपाली समुदाय र नेपाली पत्रकारहरू बढ्दै जाँदा एकजुट हुन केही गर्ने हो कि भन्ने प्रस्ताव ल्याए । मानिसहरूले

नोटिस गर्ने गरी पत्रकारितामा मेरो सक्रियता त बढ्न थालेको थियो तर संघसंस्था सञ्चालनमा म शून्य थिएँ (अहिले पनि उस्तै छ र मलाई लेख्न जस्तो अरू चीज सहज लाग्दैन) ।

आसन र भाषण दुवैबाट पर भाग्ने स्वभावको म । साथीहरू चाहिँ मलाई अगाडि सारेर पत्रकारितासँग सम्बन्धित कुनै संस्था खोल्न उक्साइरहनु भएको थियो । सायद संस्थागत ज्ञान, अनुभवभन्दा पनि मेरो क्रियाशीलता र म जोडिएको प्रकाशन संस्थाका कारण रोजिएको हुन सक्छु ।

शुरू शुरूमा बेलायतमा कार्यरत नेपाली पत्रकारहरूको बैठक राख्दा कहिलकाहीँ मात्र १० जना नाघ्थ्यो । नत्र ६/७ जना भेला हुन्थ्यौं । यसरी हामीले सीमित पत्रकारहरूबीच नेपाल पत्रकार संघको शाखा गठन गरेका थियौं । शुरुमा शाखा गठन गर्न आवश्यक संख्या १६ जना पुऱ्याउन पनि हम्मेहम्मे थियो । पत्रकारितामा चासो राख्ने, सक्रिय र सञ्चारसँग कतै जोडिएका व्यक्तिहरूलाई तानतुन गरेर संख्या पूरा गरिएको थियो ।

सन् २००९ तिर बेलायतमा कार्यरत पत्रकारहरूले बैठक बसेर बेलायतमा कार्यरत नेपाली सञ्चारकर्मीहरूको भेला गर्ने र त्यसको नाम नेपाली सञ्चारकर्मी संघ यूके राख्ने भन्ने निर्णय गरेका थियौं । तर यसरी निर्णय गरिएको एक वर्षसम्म पनि संस्थाले ठोस गति लिन सकेको थिएन ।

नेपालमा पत्रकारिता गरेर खारिएका अग्रज भगीरथ योगी, नरेश खपाङ्गी मगर लगायत पत्रकार साथीहरू सम्पर्कमा आएर उहाँहरूको सुझाव सल्लाहमा नेपाल पत्रकार महासंघको बेलायत शाखा गठन गर्ने कुरा अगाडि बढ्यो । शुरुमा हामीले सन् २०११ जुलाई १० तारिखका दिन लण्डनस्थित रारा रेष्टुरेन्टमा एक तदर्थ समिति गठन गऱ्यौं र त्यसको एक वर्षपछि सन् २०१२ मा भएको पहिलो अधिवेशनबाट मेरै अध्यक्षतामा पूर्ण कार्यसमिति बन्यो ।

नेपालको मूलधार पत्रिकामा जोडिएको र सक्रियताका आधारमा साथीहरूले मलाई पुनः नेतृत्व सम्हाल्न आग्रह गरेका थिए । संगठन सञ्चालनको अनुभव कम भए पनि साथीहरूको आग्रहमा नेतृत्व लिन तयार भएँ । पहिलो महाधिवेशनपछि संस्थाभित्र चुनौतीका पहाड थिए । बेलायतमा कार्यरत नेपाली पत्रकारहरूलाई संगठित गर्ने र उनीहरूको पक्षमा आवाज बुलन्द गर्ने महत्वपूर्ण चुनौती थियो ।

बेलायतस्थित नेपाली पत्रकारहरूको हकहित, उनीहरूका क्षमता अभिवृद्धि र वृत्ति विकास, अनुभव अवसर आदानप्रदान आदि लक्ष्यसहित पहिलो कार्यसमिति अघि बढेको थियो । बेलायतस्थित नेपाली समाजमा नयाँ संस्थाका रूपमा पत्रकार महासंघ बेलायत शाखा शुरू भएको थियो । शुरूवातको चरण भएकाले धेरै गर्न नसकिए पनि संस्थालाई जग हाल्ने काम यही वेला भयो । जसको फलस्वरूप शाखा आजसम्म सक्रिय छ र यो आलेख लेख्ने अवसर जुरेको छ । सोही वेला गैरआवासीय नेपाली संघसित मिलेर स्थापना गरिएको पत्रकारिता पुरस्कार अहिले पनि कायम छ ।

नेपाल पत्रकार महासंघ बेलायतको प्रसंग आउँदा भुल्न नमिल्ने पाटो हो पत्रकारिता अभ्यास र संघमा आबद्ध सदस्यहरूको कार्यशैली एवं क्षमता । बेलायतका नेपाली पत्रकारहरू आफ्नो व्यावसायिक धर्म निर्वाह गर्न को कत्ति सफल छन्, त्यो बहसकै विषय छ । दुःखका साथ भन्नुपर्छ, केही अपवादबाहेक हामीले अहिले गरिरहेको पत्रकारिता कपी पेष्ट केन्द्रित छ । रूखो सुनिन्छ तर हामी समाचार चोरेकै भरमा वेबसाइट नामको दोकान चलाइरहेका छौं । त्यही वेबसाइट र समाचारको भरमा वरिष्ठ पत्रकार भएर खादा, माला, आसन ग्रहणमा भ्याइनभ्याई छ हामीलाई । व्यक्तिपिच्छे अनलाइन दर्ता गरेर दूतावास, एनआरएनए यूके लगायत ठूला संस्थातिर आफ्नो नाम दर्ज गराउन लालायित छौं हामी । अनलाइनको नाममा भागबण्डा खोज्दै समुदायमा पुग्छौं ।

> **“पहिलो महाधिवेशनपछि संस्थाभित्र चुनौतीका पहाड थिए । बेलायतमा कार्यरत नेपाली पत्रकारहरूलाई संगठित गर्ने र उनीहरूको पक्षमा आवाज बुलन्द गर्ने महत्वपूर्ण चुनौती थियो ।”**

बेलायतको राष्ट्रिय राजनीति वा अन्य मानवीय चासो र नेपाली समुदायकै प्रमुख विषयमा समाचार र फिचर खोज्न किन चुकिरहेका छौं हामी ? एउटा अनलाइनमा आएको समाचार ५ मिनेटपछि सबैतिर आउने तर पहिला त्यो विषय नलेखिनुको कारण के हो ? समाचार र तस्बिरको क्रेडिट नदिने बरू जसले समाचार चोरेको छ, उसैले सानका साथ ग्रुपमा लिंक शेयर गर्ने कस्तो प्रवृत्ति मौलाइरहेको हो ? आयोजकले आफू अनुकूलका जे जस्ता समाचार पठाए, त्यही हालिदिन हामीलाई हतार छ, सम्पादनतिर त पटक्कै चासो छैन । संस्थामा जिम्मेवारी र सदस्यता लिन तँछाडमछाड गर्नेले किन पत्रकारिताको आधारभूत सामान्य मान्यता र आचारसंहिता अनुसरण गर्न सक्दैन ? समाचार वा फिचर खोज्न नसक्नु पत्रकारकै कमजोरी हो तर यो कमजोरी भन्न र कसैले औंल्याए स्वीकार गर्न नसक्ने हाम्रो मानसिकता छ ।

हो, पूर्णकालीन पत्रकारिता हाम्रो पेशा होइन, जसलाई फूलटाइम दिन सकियोस् । सबैले पत्रकारिता पढेको हुँदैन, शैक्षिक योग्यता केही घटबढ हुन सक्छ । हामीले सीमित स्रोत साधनबीच बेलायती अखबारका जस्ता सामग्री पस्कन पनि सक्दैनौं तर नजानेको कुरा सिक्न र सिकाउन हामी संकोच मान्छौं । पत्रकारिता हतारको साहित्य हो र सिकेर नसकिने पेशा पनि । समयानुसार आफूलाई अपडेट गराउँदै लानुपर्ने, पत्रकारितालाई व्यावसायिक, मर्यादित, नयाँ पुस्तालाई यो क्षेत्रमा लाग्न उत्प्रेरित गर्न सक्नुपर्ने चुनौती हामीसामु छ । बेलायतमा भूतपूर्व गोर्खा समुदायको बलियो उपस्थिति छ, त्यस्तै सशक्त सामाजिक संस्थाहरू छन् । व्यवसाय पनि फैलिरहेका छन् । यी सबै गतिविधिलाई समेटेर नेपाली पत्रपत्रिकाले समाचार प्रवाह गरिरहेका छन् तर ती आफैं दिगो बन्न सकेका छैनन् । यसतर्फ हाम्रो समुदायका अगुवा र सञ्चारकर्मीहरूबीच थप छलफल हुन आवश्यक देख्छु ।

*(लेखक शाखाका संस्थापक अध्यक्ष हुन् ।)*

# पत्रकार महासंघ बेलायत शाखामा बिताएका दश वसन्त



चिरन शर्मा

> हाम्रो कार्यकालमा विशेषगरी पत्रकारलाई संगठित गर्ने, नेपालको राजनीतिक-सामाजिक विषयमा अन्तरसंवाद तथा वरिष्ठ पत्रकारलाई सम्मान र पेशागत क्षमता अभिवृद्धिसँगै परोपकारी काम गर्ने कार्ययोजना थियो।

**सन्** २००२ को अक्टोबर अन्तिमतिर बेलायत आइपुगेँ । एउटा चिन्ता देश छोड्दाको थियो भने अर्को चिन्ता बेलायतमा कसरी स्थापित हुने भन्ने थियो । नेपालमा हुँदा निकै ठूला सपना थिएनन् । उज्ज्वल भविष्य, आकाश छुने महल सपनाको संसारको फराकिलो परिकल्पना मलाई मनमा कहिल्यै आएन । विदेश जानेहरूको लहरमा मिसिएर ख्यालख्यालमै लण्डन आइपुगेँ । विदेशिन कठिन भएन ।

घरदेश हुँदा विज्ञान र प्रविधि शीर्षकमा 'प्रस्फुटन' साप्ताहिकमा स्तम्भ लख्थेँ । पत्रकारिता क्षेत्र अहिलेको जस्तो फराकिलो र व्यापक थिएन ।

साप्ताहिक पत्रिका 'विमोचन'मा आक्कलझुक्कल लेख लेख्थेँ । त्यही सानो अनुभव थियो पत्रकारिताको । देशमा छँदा लिएको त्यही अनुभवबाट बेलायतमै पनि नेपाली पत्रकारिता गर्न सकिन्छ भन्ने आत्मविश्वास बढ्यो । यति वेला बेलायतमा अरू नेपालीहरू ओभरटाइम काम गर्ने र दुई पाउण्ड भए पनि बढी कमाउन दौडिन्थे तर मलाई नेपाली पत्रकारिताको बढी भोक थियो । आफ्नो अनुभव र साथीहरूको सहयोगमा 'लण्डन पोष्ट' नामक पहिलो म्यागिजनमा सन् २००३ मा प्रकाशन गर्ने अवसर मिल्यो ।

हुनत नेपालीको बसोवास बढेसँगै तिनै वर्गलाई लक्षित गरेर सन् ६० को दशकमा यहाँ 'यतीपत्र' प्रकाशन भएको रहेछ । ९० को दशकमा 'सगरमाथा टाइम्स' र २००२ मा 'नेपाली सन्देश' साप्ताहिक प्रकाशन भएको थियो ।

लण्डन पोष्टले निरन्तरता पाउन नसकेपछि पत्रकार केशव श्रेष्ठ र व्यवसायी विजय थापासँगको सहकार्यमा अर्को म्यागिजन 'चौतारी' प्रकाशन भयो । त्यति वेला बेलायतमा पनि सक्रिय नेपाली पत्रकारहरूको संख्या न्यून थियो । बीबीसी नेपाली सेवाका पत्रकार बाहेक समाजमा अरू पत्रकारको उपस्थिति ज्यादै कम थियो । बीबीसीका नेपाली पत्रकार प्रत्यक्ष रूपमा समाजसँग जोडिएका थिएनन् ।

बेलायतमै बसेर केही गरौँ भन्ने भावनाका साथ बीबीसीका तत्कालीन प्रमुख रवीन्द्र मिश्र लक्षित गरेर माइसंसारको ब्लगमा एउटा लेख प्रकाशन गरेँ । त्यही क्रममा बीबीसीका अर्का अर्का पत्रकार भगीरथ योगीसँग परिचय भयो ।

योगीसँगको सम्पर्क र समन्वय नै नेपाली समाज र बीबीसी नेपाली सेवासँगको सम्बन्ध बलियो बनाउन कोशेढुंगा सावित भयो । अग्रज पत्रकार योगीसँगको संगतका कारण सिक्ने र संस्था नै स्थापना गर्ने बाटो खुल्यो । वेलावेलामा अरूभन्दा फरक काम गरौँ जस्तो लाग्थ्यो । सन् २००७ मा आनै सक्रियतामा पहिलो पटक नेपाली भाषाको समाचार अनलाइन पोर्टल नेपालब्रिटेन डट कमको शुरूआत गरेँ ।

त्यसपछि बेलायतमा नेपाली लक्षित सञ्चारमाध्यमको विकास र विस्तार हुँदै गयो । नेपालबाट अध्ययनका लागि बेलायत आउने सक्रिय पत्रकारको बाक्लो उपस्थिति देखिन थाल्यो । संख्या बढ्दै गएपछि सामूहिक संगठित मञ्चको आवश्यकता देखियो ।

सन् २००९ मा पत्रकारको संस्था बनाउने प्रयास भयो । शुरूमा नेपाली मिडिया एशोसियशन यूके नामको संस्था स्थापना गर्ने प्रस्ताव गरिएको थियो । नेपाल पत्रकार महासंघ र सक्रिय अग्रज पत्रकारको छलफलपछि नेपाल पत्रकार महासंघको शाखाको रूपमा नेपाल पत्रकार महासंघ यूकेको स्थापना गर्ने सुझाव आयो । सन् २०११ जुलाई १० मा लण्डनमा भएको भेलाबाट संस्थाले मूर्तरूप

लियो र जन्मियो नेपाल पत्रकार महासंघ बेलायत शाखा ।

नेपाल पत्रकार महासंघ यूके शाखाको सन् २०१२ जनवरी १४ मा पहिलो अधिवेशनले नवीन पोखरेलको अध्यक्षतामा कार्यसमिति चयन गरेको थियो । उक्त समितिमा वरिष्ठ उपाध्यक्षको जिम्मेवारी सम्हाल्ने अवसर मिल्यो ।

**शाखाको नेतृत्वमा दुई वर्ष**

सन् २०१४ मार्च ९ मा भएको दोस्रो अधिवेशनबाट मेरो अध्यक्षतामा नयाँ निर्विरोध कार्यसमिति गठन भयो । दोस्रो अधिवेशन सकिएपछि शाखालाई संस्थागत र सुधार गर्ने कार्ययोजना तयार गरियो । दोस्रो अधिवेशनसम्म आइपुग्दा ५८ जना पत्रकार आबद्ध थिए ।

हाम्रो कार्यकालमा विशेषगरी पत्रकारलाई संगठित गर्ने, नेपालको राजनीतिक-सामाजिक विषयमा अन्तरसंवाद तथा वरिष्ठ पत्रकारलाई सम्मान र पेशागत क्षमता अभिवृद्धिसँगै परोपकारी काम गर्ने कार्ययोजना थियो ।

त्यसैगरी गम्भीर बिरामी परेका नेपाली पत्रकारलाई आर्थिक सहयोगको कार्यक्रम पनि चलाइयो । शाखाले महासंघको आह्वानअनुसार रमेश चालिसे, शान्ता पौडेल, पाल्पाका बीके पाल्पाली, चुनबहादुर गुरूङ र श्रीलाल शाहको उपचारमा आर्थिक सहयोग गरेको थियो ।

हेल्प नेपाल नेटवर्कसँगको सहकार्यमा विपद् पीडितका लागि शाखाले करिब २० लाख रूपैयाँ सहयोग गर्‍यो । हेल्प नेपाल नेटवर्क, ब्लड डोनर एशोसियशन र हार्ट फाउण्डेसनजस्ता परोपकारी संस्थासँगको सहकार्यमा विभिन्न परोपकारी काम गर्नुका साथै भूकम्प पीडित पत्रकारका लागि शाखाले करिब १३ लाख रूपैयाँ संकलन गरेर नेपाल पठायो ।

बेलायतमा भइरहेका पत्रकारिताका गतिविधि र यहाँको नेपाली समाजका विभिन्न आयामलाई समेटेर 'प्रवासी पत्रकारिता' नामक स्मारिका प्रकाशनको शुरूवात गरिएको थियो । शाखाले मिडिया सर्वेक्षण, प्रेस स्वतन्त्रता दिवसको अवसरमा अन्तरसंवाद, यहाँ हुने नेपाली मेलाहरूमा




मिडिया प्रदर्शनी, एनआरएन यूरोपको क्षेत्रीय बैठकमा 'एनआरएन र विदेशमा नेपाली पत्रकारिता तथा लगानीका सम्भावना'का बारेमा छलफल चलाएको थियो ।

बेलायतको समाज सुहाउँदो छुट्टै पत्रकार आचारसंहिता तयार पारिएको थियो । उक्त आचारसंहिताले पहिलोपटक पत्रकारहरूले मदिराजन्य पेय पदार्थलाई सामाजिक सञ्जालमार्फत सार्वजनिक गर्न प्रतिबन्ध लगाएको थियो ।

यसैगरी तमुधि यूकेसँग नेपाली मेलाका सम्बन्धमा संस्थागत सहकार्य, नेपालबाट यहाँ आउने उच्च प्रशासक, पत्रकार र कलाकारसँग अन्तरसंवाद पनि शाखाका नियमित गतिविधि थिए । शाखा सदस्य गुणदेव घिमिरेलाई कतार सरकारले नियन्त्रणमा लिएपछि रिहाइका लागि कतार दूतावास लण्डनमा पत्राचार गरेर उनलाई मुक्त गर्न सहयोग गरिएको थियो ।

शाखाकै अगुवाइमा २०७१ फागुन २७ गते गैरआवासीय नेपाली संघका वर्तमान, निवर्तमान र भूपू पदाधिकारीहरूसँग नेपाल पत्रकार महासंघको केन्द्रीय कार्यालयमा विशेष अन्तरसंवाद भएको थियो ।

विगत १० वर्षमा शाखाले बेलायतमा रहेका नेपालीका समस्या, उनीहरूबीचको एकता र भाइचारा अभिवृद्धिमा पनि चासो दिँदै आएको छ । सञ्चार सम्बद्ध आन्दोलन होस् या नेपालमा भएका प्रेस स्वतन्त्रता विरूद्धका गतिविधि सबैमा शाखाले भूमिका खेल्दै आएको छ ।

नेपालबाट यहाँ आउने राजनीतिक, सामाजिकसहित हरेक क्षेत्रका महत्वपूर्ण व्यक्तित्वसँग शाखाले हार्दिक सम्बन्ध स्थापित गर्ने काम गरेको थियो । शाखाका सदस्यहरू नेपालको राष्ट्रिय मूलधारको सञ्चारमाध्यमसँग आबद्ध छन् । उनीहरूले गैरआवासीय नेपाली अभियान, बेलायतमा रहेको भूपूगोर्खा, नेपाल-बेलायत कूटनीतिक सम्बन्ध लगायत बेलायतमा रहेका नेपाली समुदायका चासो र सरोकारका विषयमा कलम चलाउँदै आएका छन् ।

बेलायतमा नेपाली पत्रकारिता पेशालाई व्यावसायिक बनाउन चुनौतीका पहाड छन् । शाखाको सक्रियताले नेपाली पत्रकारितालाई मर्यादित, व्यावसायिक तथा सम्मानित बनाउन टेवा पुग्ने कुरामा दुई मत छैन । ●

*(लेखक शाखाका पूर्व अध्यक्ष हुन् ।)*

# बेलायत शाखामा दुई कार्यकाल


नरेश खपाङ्गी मगर

“अन्त्यमा शाखाले एक दशकको यात्रा तय गरेको छ । विभिन्न आरोह–अवरोह, बाधा–व्यवधानका बीचमा पनि समग्रमा बेलायतमा सकारात्मक छवि निर्माण गर्न शाखा सफल भएको छ ।”

**नेपाल** पत्रकार महासंघका बारेमा रत्नराज्यलक्ष्मी कलेजमा पत्रकारिता अध्ययन शुरू गर्दादेखि नै जानकारी थियो । मैले पहिल्यैदेखि चिनेका दाइ उजिर मगर ललितपुर शाखाका सचिव हुनुहुन्थ्यो । म पाटनढोका बस्ने भएकाले उहाँसित फोनमा कुराकानी गरेर ललितपुर शाखामा महासंघको सदस्यताको फाराम भरेँ । जगतमान दोङ कार्यालय सचिव हुनुहुन्थ्यो । उहाँलाई बुझाएँ तर मैले सदस्यता पाइनँ । ठानेँ, महासंघको सदस्यता पाउनु मैले सोचेजस्तो सजिलो रहेनछ । २०५९ सालमा गोरखापत्र दैनिकमा पूर्णकालीन उपत्यका समाचारदाताका रूपमा काम गर्न शुरू गरेपछि भने महासंघको सदस्यता सजिलो तवरले मिल्यो । २०६० सालमा सम्पन्न शाखाको अधिवेशनमा म कार्यसमितिको सदस्य समेत भएँ । त्यसपछि अर्को अधिवेशनमा चुनाव लडेरै केन्द्रीय पार्षद पनि भएँ ।

२०६६ सालमा बेलायत आउँदा बेलायतमा नेपाली पत्रकारहरूको कुनै संस्था थिएन । करिब तीन महिना बसेर नेपाल गएका वेला सहकर्मी नवीन पोखरेलले बेलायतमा नेपाली पत्रकारहरूको भेला हुँदै गरेको जानकारी दिनुभएको थियो । भेलाले यूकेमा पत्रकारहरूको संगठन बनाउने निधो गरेको रहेछ तथापि त्यो नेपाल पत्रकार महासंघको शाखा गठन गर्ने भन्ने चाहिँ निर्णय पुस्तिकामा थिएन । म बेलायत फर्किसकेपछि जुलाई ११, २०११ मा रारा रेष्टुरेन्ट, राइस्लिप, लण्डनमा भएको बैठकमा नेपाल पत्रकार महासंघ यूके शाखा भनेर लेखिएको छ । शुरूमा नवीन पोखरेल संयोजक र ईश्वर रिजाल सदस्यसचिव हुनुहुन्थ्यो । हामी बाँकी सबै सदस्य रहेका थियौँ ।

केही सातापछि नै केही कारण देखाउँदै ईश्वर रिजालगायतका केही साथी तदर्थ समितिबाट बाहिरिनु भयो । त्यसपछि चिरन शर्मा उपसंयोजक र मलाई सदस्यसचिव तोकियो । पहिलो अधिवेशनबाट म निर्विरोध महासचिव भएँ । दोस्रो महाधिवेशनबाट वरिष्ठ उपाध्यक्ष, तेस्रो र चौथो महाविधेशनबाट अध्यक्ष पदमा निर्विरोध निर्वाचित भएँ । यसरी स्थापनाकालदेखि करिब १० वर्ष शाखाको विभिन्न पदमा बसेर काम गर्ने सौभाग्य पाएँ । शाखाका पूर्व अध्यक्षहरूले आ–आफ्नो कार्यकालको अनुभव लेख्नुहुने भएकाले यहाँ भने मेरो अध्यक्षता रहेको समयावधि (सन् २०१६ देखि सन् २०२१ सम्म) भएका केही महत्वपूर्ण कार्यको मात्र चर्चा गरिनेछ ।

यस अवधिमा भएका कार्यलाई मुख्यत चार विधामा विभाजन गरेर चर्चा गर्न उपर्युक्त ठान्छु ।

**क) समुदायसित अन्तरसंवाद**

महासंघमा रहेर काम गर्दा वा पत्रकारिता गरिरहँदा बेलायतका नेपाली समुदाय र पत्रकारबीच एकले अर्कालाई अझ नजिकबाट चिन्नुपर्ने आवश्यकता महसुस गरेँ । यस्तो महसुस हुनुको कारण के थियो भने बेलायतमा आएका धेरैजसोलाई नेपालको पत्रकारिताको अवस्थाका बारेमा केही हदसम्म थाहा थियो । जसलाई थाहा थिएन उनीहरूलाई बेलायतको मूलधारको पत्रकारिताका बारेमा थोरै भए पनि जानकारी थियो । त्यसो भन्नुको अर्थ नेपालमा प्रजातन्त्रको पुनःस्थापनापछि पत्रकारिता उद्योगका रूपमा विकसित भएको थियो ।

पत्रकारितामा लाग्ने धेरैले नाम र दाम कमाएका थिए । त्यसैले नेपालको पत्रकारिताका बारेमा ज्ञान भएकाहरूलाई बेलायतका नेपाली पत्रकारहरू पनि त्यस्तै सुखी जीवन बाँचिरहेका छन् कि भन्ने थियो । उहाँहरूले बेलायतमा सञ्चालित नेपाली मिडियाहरू पनि कान्तिपुर जस्तै नाफामा मात्र होइन पैसा नै पो छापिरहेका छन् कि जस्तो ठान्नुहुन्थ्यो । उता बेलायतको पत्रकारिताका बारेमा अलिअलि बुझेकाले पनि नेपाली पत्रकारितालाई राम्रै अवस्थामा भएको तरिकाले अर्थ्याउने सम्भावना अधिक थियो ।

वास्तवमा बेलायतको नेपाली पत्रकारिता स्वयंसेवी रूपमा चलेको थियो । लगानीकर्ताहरूले अरूतिरबाट कमाएको पैसाबाट सञ्चारमाध्यम



चलाएका थिए । उनीहरूको अरू व्यावसायिक उद्देश्य थिए होलान् तर मिडियाबाटै आर्थिक आर्जन भने भइरहेको थिएन । पत्रकारहरू कार्यक्रममा आनै गोजीबाट भाडा तिरेर वा इन्धन हालेर पुग्थे । अरू कामबाट समय बचाएर समाचार तयार पार्थे, छाप्थे । नियमित तलब पाउने पत्रकारहरू अति नै कम थिए । जसमा पूर्णकालीन त कुरै नगरौं आंशिक तलब पाउनेहरू पनि औँलामा गन्न सकिने संख्यामा थिए । धेरै त स्वयंसेवक थिए ।

यसरी बेलायतको नेपाली पत्रकारिताको वास्तविकता र समाजको अपेक्षाका बीचमा अन्तरसंवाद हुनुपर्थ्यो । एकले अर्काको समस्या, अवस्था बुझ्नुपर्थ्यो । त्यसो भएको खण्डमा एकआपसमा सम्बन्ध सुमधुर हुनाका साथै भरथेग पनि हुन्थ्यो । प्रत्यक्ष भेटघाट भएपछि एकआपसमा विश्वसनीयता पनि बढ्थ्यो । सम्पर्क आदानप्रदान हुन्थ्यो । यसबाट समाचारका कारण हुनसक्ने द्वन्द्व घटाउन पनि सहयोग पुग्थ्यो । त्यसैले मेरो कार्यकालमा समाजका विभिन्न तप्का र पत्रकारका बीचमा विभिन्न स्थानमा अन्तरसंवाद कार्यक्रमहरू आयोजना गरियो । अल्डरसटबाट शुरू भएको सो कार्यक्रम दक्षिण पूर्वी लण्डनको प्लमस्टिड, केन्ट, मिडल्याण्डको लेस्टरसम्म पुगेको थियो । यसलाई वेल्स, स्कटल्याण्ड र उत्तरी आयरल्याण्डसम्म पुऱ्याउने योजना भए पनि कोरोना महामारीका कारण सम्भव भएन ।

**ख) च्यारिटी डिनर**

मेरो कार्यकालमा नेपाली पत्रकारहरूद्वारा बेलायतमा भव्य च्यारिटी कार्यक्रम आयोजना गरिएको थियो । २०१७ को मे महिनामा आयोजित उक्त कार्यक्रमबाट करिब ३३ हजार पाउण्ड संकलन भएको थियो । सम्पूर्ण खर्च कटाएर पनि करिब २१ हजार पाउण्ड शाखाको कोषमा दाखिला गरिएको थियो । पत्रकारहरूलाई समस्या पर्दा सहयोग गर्ने उद्देश्यले सो च्यारिटी डिनर गरिएको थियो । तर अरू समयमा आइपर्ने एकाध समस्याभन्दा सन् २०२० को शुरूवातबाट फैलिएको कोरोना भाइरसको महामारीले नेपाली पत्रकारहरूलाई पनि नराम्ररी प्रभावित पाऱ्यो । त्यसैवेला नेपाल पत्रकार महासंघ केन्द्रीय समितिले विश्वभरका नेपाली पत्रकारहरूलाई सहयोग गर्ने गरी एक करोड राशिको कोष बनाउने घोषणा गऱ्यो । त्यसपछि बेलायतले शाखाको बैठक बसी हामी शाखाले सानो कोष राखिरहनुभन्दा यसबाट धेरैभन्दा धेरै नेपाली पत्रकारहरूलाई लाभ पुगोस् भन्ने सोच राखी २३ लाख रूपैयाँ नेपाल पत्रकार महासंघको कोषमा जम्मा गरिएको छ ।

बाँकी रकम बेलायतमा खोज तथा अनुसन्धानमूलक पत्रकारिताका लागि नेपाली पत्रकारहरूलाई प्रोत्साहन गर्न एफएनजे यूके वर्ष पत्रकारिता पुरस्कार स्थापना गरिएको छ । गत वर्षदेखि वितरण हुन शुरू भएको सो पुरस्कार पहिलोपटक पत्रकार श्रीभक्त खनालले पाएका थिए भने यो वर्ष पनि वितरण हुने क्रममा छ ।

**ग) वृत्ति विकास**

शाखामा आबद्ध पत्रकारहरूको वृत्ति विकासका लागि निरन्तर रूपमा तालिम, अनुभव आदानप्रदान र भ्रमण गरिएको थियो । खोजमूलक पत्रकारिता र बेलायतमा प्रेसबारेको कानूनी प्रावधानका बारेमा बीबीसी जर्नलिज्म स्कुलका पल मायर्स र ब्यारिष्टर देवेन्द्र श्रेष्ठले तालिम दिनुभएको थियो । यस्तै खोजपत्रकारिताका बारेमा खोज पत्रकारिता केन्द्रका निर्देशक शिव गाउँले, अनलाइन पत्रकारिताका बारेमा प्रवेश सुवेदी र भरतराज पौड्याल, नेपाली पत्रकारितामा प्रवासबाट अपेक्षाका बारेमा नयाँ पत्रिका दैनिकका तत्कालीन सम्पादक उमेश चौहान, महिलाहरूको सहभागिताबारेमा बबिता बस्नेत र यशोदा तिम्सिना, प्रेस काउन्सिल नेपालका कामका बारेमा प्रेस काउन्सिल नेपालका तत्कालीन कार्यवाहक अध्यक्ष गोपाल बुढाथोकी लगायतसित पत्रकारिता संवाद गरिएको थियो ।

यसका साथै पत्रकारहरूलाई बोर्नमाउथ विश्वविद्यालयको मिडिया स्कुलको भ्रमण गराई त्यहाँका प्राध्यापकहरूसित अन्तरसंवाद गरिएको थियो भने बेलायती संसद्को भ्रमणसमेत गराइएको थियो । शाखाका सदस्यहरूको कार्यथलो बेलायत भएका कारण महासंघको केन्द्रबाट प्राप्त हुने प्रेसपासले



कतिपय अवस्थामा काम गर्न अड्चन आउनसक्ने अवस्थालाई ध्यानमा राखी मेरो कार्यकालमा इच्छुक सदस्यहरूलाई अन्तरराष्ट्रिय फेडरेशन अफ जर्नालिष्ट (आइएफजे) को प्रेसपास पनि दिलाइएको थियो, जसको मान्यता विश्वव्यापी रहने गरेको छ ।

**घ) कोरोना महामारीमा जनचेतना**

यसबीचमा विश्वव्यापी महामारीका रूपमा फैलिएको कोरोना भाइरसको पनि सामना गर्नुप¥यो । कोरोनाबाट बेलायत पनि निकै नराम्ररी प्रभावित भयो । अन्य महामारीहरूभन्दा नयाँ किसिमको र घातक यो महामारीबाट नेपाली समुदाय (जो नेपालीबाहेक अरू भाषा बुझ्दैनन्) लाई कसरी बचाउने भन्ने सामाजिक जिम्मेवारी पूरा गर्न महासंघले आफ्नो सदस्यहरू र बेलायतमा सञ्चालित मिडियाहरूलाई पूर्णरूपमा परिचालन ग¥यो । शाखाका सदस्यहरूले चिकित्सक, नर्स, समुदायका अग्रज, मनोपरामर्शदाता, जनस्वास्थ्यविद्हरू लगायतसित कुरारानी गरेर, अन्तर्वार्ता, समाचार, फिचर तयार गरे । त्यसलाई बेलायतबाट सञ्चालित सबै मिडियाहरूबाट एकसाथ प्रकाशन र प्रसारण गरियो । सामाजिक सञ्जालबाट पनि भरमग्दुर प्रवाह गरियो । त्यसो गर्नुको कारण थियो धेरैभन्दा धेरै मानिससमक्ष त्यस्तो सन्देश पुगोस् । यसबाट सही सूचनाको अभाव तथा दिनदिनै नयाँ नयाँ किसिमका अफवाह प्रवाह भइरहेका वेला बेलायतको नेपाली समुदायलाई सही सूचना पाउनमा अवश्य पनि फाइदा भयो भन्ने विश्वास छ ।

यसका साथै महासंघले कोरोनाको लहर पटकपटक चलिरहने भएकाले नेप्लिज डक्टर्स एसोसिएसन यूके, नेप्लिज नर्सिङ एसोसिएन यूके, गैरआवासीय नेपाली संघ यूकेसित मिलेर स्वास्थ्य संवाद नामक कार्यक्रम आयोजना ग¥यो । भर्चुअल रूपमा आयोजना हुने सो संवादका माध्यमबाट बेलायतमा बसोवास गर्ने सर्वसाधारणले चिकित्सकहरूसित आफ्नो समस्या प्रत्यक्ष रूपमा राख्नका पाएका थिए । यो बेलायतका व्यावसायिक संस्थाहरूबीचको उदाहरणीय सहकार्यको उदाहरणसमेत थियो ।

यसबाहेक शाखाले नियमित रूपमा गर्नुपर्ने बैठक र साधारणसभा ग¥यो । शाखामा सदस्यता प्रक्रियालाई व्यवस्थित बनाउन कठोर निर्णयहरू गरिएका छन् । यसबाट क्षणिक रूपमा कसैलाई असर गरेको होला तर शाखाको दीर्घकालीन हितलाई हेरेर यस्तो प्रावधान तय गरिएको हो ।

> **"शाखामा सदस्यता प्रक्रियालाई व्यवस्थित बनाउन कठोर निर्णयहरु गरिएका छन्। यसबाट क्षणिक रुपमा कसैलाई असर गरेको होला तर शाखाको दीर्घकालीन हितलाई हेरेर यस्तो प्रावधान तय गरिएको हो।"**

शाखाले बेलायतमा रहेका अग्रज नेपाली पत्रकारहरूलाई सम्मान गर्ने परम्पराको शुरूवात गरेको छ । यसक्रममा चौथो अधिवेशनमा वरिष्ठ पत्रकारहरू खगेन्द्र नेपाली, डा. सिबी गुरूङ, खेम गुरूङ र मेजर रिटायर्ड सोनाम छिरिङ शेर्पालाई सम्मानित गरिएको थियो भने पाँचौं अधिवेशनमा अग्रज सञ्चारकर्मीहरू भगीरथ योगी, चिरञ्जीवी पौड्याल, विजय थापा, सुरेशजंग शाह, सुमन खरेललाई सम्मान गरिएको थियो ।

अन्त्यमा शाखाले एक दशकको यात्रा तय गरेको छ । विभिन्न आरोह–अवरोह, बाधा–व्यवधानका बीचमा पनि समग्रमा बेलायतमा सकारात्मक छवि निर्माण गर्न शाखा सफल भएको छ । यो कसैको एकल प्रयासबाट भएको होइन बरू शाखामा आबद्ध सबै सदस्यहरूको सामूहिक योगदानबाट भएको हो । कुनै पनि व्यक्ति वा संस्थाको साख जति जति उचाइमा पुग्दै जान्छ त्यति त्यति त्यसलाई आफू अनुकूल प्रयोग गर्ने व्यक्ति, समूह वा संस्थाहरूको प्रयास रहने कुरालाई शाखाको नेतृत्वले चनाखो भएर हेर्नुपर्ने हुन्छ । व्यक्तिगत रूपमा, राजनीतिक आस्था, धार्मिक विश्वास, क्षेत्रीयताका नाताले कसैसित नजिक हुनु स्वाभाविक होला तर शाखाको नेतृत्वमा बसिसकेपछि त्यस्ता कुरालाई होइन शाखाको साख र सदस्यहरूको आवाजलाई प्राथमिकता दिनुपर्छ । हरेक निर्णय गर्नअघि यति मात्र गर्न सकिएमा शाखाको साख अझ उँचो रहनेछ । विगतका सकारात्मक अनुभवलाई निरन्तरता दिँदै र नकारात्मक अनुभवलाई त्याग्दै शाखालाई जीवन्त, समयसापेक्ष, गतिशील पार्दै जानुपर्छ ।

कोरोना महामारीले सीमित बनाइदिएको जीवनशैलीकै बीचमा मैले कार्यभार हस्तान्तरण गर्दा र नयाँ नेतृत्वका लागि भएको चुनावी वातावरणका कारण धेरैको ध्यान नतिजातर्फ धेरै केन्द्रित हुँदा मैले मेरो कार्यकालमा सहयोग गर्नुहुने सबैलाई जति ठूलो स्वरमा धन्यवाद भन्न पर्थ्यो त्यो अवसर पाइनँ । त्यसैले मेरो कार्यकालमा सहयोग, सल्लाह, सुझाव दिनुहुने सबैप्रति यसै आलेखमार्फत हार्दिक आभार अर्पण गर्दछु । ●

*(लेखक शाखाका निवर्तमान अध्यक्ष हुन् ।)*

# हार्दिक बधाई तथा शुभकामना

नेपाल पत्रकार महासंघ बेलायत शाखाको **दशौँ वार्षिकोत्सव तथा स्थापना दिवसको** अवसरमा शाखाका सम्पूर्ण सदस्यहरुमा हार्दिक बधाई तथा उत्तरोत्तर प्रगतिको शुभकामना व्यक्त गर्दछु ।




**हित काजी गुरुङ**
**अध्यक्ष**
**तमुधिं यूके**

# हार्दिक बधाई तथा शुभकामना

नेपाल पत्रकार महासंघ बेलायत शाखाको **दशौँ वार्षिकोत्सव तथा स्थापना दिवसको** अवसरमा शाखाका सम्पूर्ण सदस्यहरुमा हार्दिक बधाई तथा उत्तरोत्तर प्रगतिको शुभकामना व्यक्त गर्दछु ।




**सीता पुन**
**अध्यक्ष**
**मगर संघ यूके**

# हार्दिक बधाई तथा शुभकामना

नेपाल पत्रकार महासंघ बेलायत शाखाको **दशौँ वार्षिकोत्सव तथा स्थापना दिवसको** अवसरमा शाखाका सम्पूर्ण सदस्यहरुमा हार्दिक बधाई तथा उत्तरोत्तर प्रगतिको शुभकामना व्यक्त गर्दछु ।




**गोमा राना**
**अध्यक्ष**
**फोनिज यूके**

# हार्दिक बधाई तथा शुभकामना

नेपाल पत्रकार महासंघ बेलायत शाखाको **दशौँ वार्षिकोत्सव तथा स्थापना दिवसको** अवसरमा शाखाका सम्पूर्ण सदस्यहरुमा हार्दिक बधाई तथा उत्तरोत्तर प्रगतिको शुभकामना व्यक्त गर्दछु ।



**चन्द्रबहादुर राई**
**अध्यक्ष**
**किराया बेलायत**

# दशौं वर्षमा नेपाल पत्रकार महासंघ यूके



खगेन्द्र नेपाली

**हामी** नेपालीहरूको आप्रवासनको परम्परा सदियौं पुरानो छ । धेरैले जीविकोपार्जनकै लागि समेत आफ्नो थातथलो छाडेर दूरदराजका देशहरूमा रोजगारीको खोजीमा हिंडेका थिए र रहँदाबस्दा तीमध्ये कैयौं तिनका कर्मभूमिका हुनगए । त्यस परिप्रेक्ष्यमा हेर्ने हो भने बेलायतमा नेपालीहरूको बसाइँसराइको परिदृश्यलाई चाहिँ नयाँ नै मान्नुपर्छ । वास्तवमा सन् १९६० को दशकदेखि मात्रै स्थायी रोजगारका लागि फाट्टफुट्ट रूपमा नेपालीहरू आएको देखिन्छ । बेलायती सेनामा काम गर्ने त्यसवेलाका गोर्खा सैनिक तथा विशेष तालिम वा उच्च शिक्षाका लागि छात्रवृत्तिमा आउने विद्यार्थीहरूको बेलायत बसाइ भने निश्चित अवधिका लागि अस्थायी हुन्थ्यो । उनीहरू सेवा वा अध्ययन अवधि पूरा भएपछि नेपाल फर्कन्थे ।

यहाँ नेपालीहरूको संख्यामा वृद्धि भएसँगै उनीहरूमा आफ्नो देशका खबर थाहा पाउने उत्सुकता पनि पनि बढदै गएको देखिन्छ । स्वभाविकै पनि हो नेपालीहरू जहाँ गए पनि आफ्नो मन मुटुमा देशको माटोको सुगन्ध सधैं जोगाइ राख्छन् ।




सन् १९८० दशकको उत्तरार्धसम्म पनि बेलायतमा इन्टरनेटमा आम पहुँच सीमित रूपमा थियो । सञ्चारका अन्य माध्यमहरू पनि सीमित र अति खर्चिला थिए । त्यसमा पनि नेपालमा दूरसञ्चारको सीमित विकास र विस्तारका कारण नेपालसँगको टेलिफोन र टेलिग्राम सम्पर्कको महसुल धेरै महँगो थियो ।

त्यसवेलाका नेपाली समुदायलाई स्वदेशको साधारण खबर हुलाकमा खसालेको हप्ता दश दिनपछि हात पर्ने चिठ्ठीपत्र वा कसैले भनेको 'रे' वा 'सुन्छु नि' मा भर पर्नुपर्ने बाध्यता थियो । ७० र ८० को दशकसम्मै पनि बेलायतमा स्थायी रूपमा बसोवास गर्ने नेपालीको संख्या निकै कम थियो । त्यसताका धेरैजसो एकअर्कासँग परिचित हुन्थे । म बीबीसीमा काम गर्छु र नेपालसँग दैनिक सम्पर्कमा हुन्छु भन्ने थाहा पाएर साथीभाइ दिदीबहिनीहरूले त्यस्तै कुनै जमघटमा भेट हुनासाथ सन्चोबिसन्चो हैन, आज नेपालको खबर के छ भनेर सोध्थे । त्यसकारण पनि त्यस्तो ठाउँमा जानुअघि एकदुई खबर प्रसंग राम्ररी सम्झनुपर्ने हुन्थ्यो ।

आवश्यकताका कारण विस्तारै समाचार प्रवाहका माध्यमहरू फाट्टफुट्ट रूपमा देखापर्न थाले । यसमा यती संस्थाले त्यति वेला हप्ता दश दिनमा प्राप्त हुने गोरखापत्रका समाचारहरू कटिङ गरी फोटोकपी गरेर सीमित संख्यामा वितरण गर्न थाल्यो, त्यसैक्रममा सगरमाथा टाइम्सको प्रकाशन र मिडियम वेभ फ्रिक्वेन्सीमा केही समय नेपाली भाषामा रेडियो कार्यक्रम पनि चलेको थियो ।

बेलायतमा आज नेपाली पत्रकारिता र सञ्चारमाध्यमहरूको उपस्थिति उल्लेखनीय र स्वागतयोग्य छ । यस विकास क्रमको शुरूवातमा केही उद्यमी, उत्साही र परिश्रमी युवाहरूको योगदान रहेको छ । विगतमा तीमध्ये धेरैले आफ्नो भिन्न पेशा र रोजगार गर्दागर्दै पनि बचेको समयमा समुदायलाई सुसूचित तुल्याउन धेरै मिहिनेत गरेका थिए ।

अब त्यो परिदृश्यमा परिवर्तन हुँदै आएको छ । नेपाली पत्रकारहरूको छाता संगठन

नेपाल पत्रकार महासंघ बेलायत शाखा स्थापना भएको दश वर्ष भएको छ । आज पत्रकारिता स्वतन्त्र छ, सम्प्रेषणका माध्यमहरू विविध र सर्वसाधारणको पहुँचमा छन् । बेलायतमा नेपाली सञ्चारकर्मीहरू पनि बढी पेशेवर र दक्ष छन् । उनीहरू समाचारको विषय, तिनको पृष्ठभूमि र सम्भावित परिणामबारे विश्लेषण गर्न सक्षम छन् । तीमध्ये कतिपयले मातृभूमिका विभिन्न समाचार संस्थाहरूलाई बेलायतमा नेपाली गतिविधि र बेलायती जनजीवन, राजनीतिक घटना र परिवेशबारे अवगत गराएर योगदान गरिरहेका छन् ।

समसामयिक पत्रकारिताको परिदृश्यको एउटा ठूलो हिस्सा विद्युतीय सञ्चारमाध्यमले ओगटेको छ । आजका नेपाली पत्रकारहरूले पनि स्वभावतः यसको भरपूर उपयोग गरेका छन् । यो माध्यमको गति जति छिटो र प्रभावकारी छ त्यति नै पहुँच पनि सहज र सुलभ छ । अधिकांश विद्युतीय सञ्चारमाध्यमहरू निष्पक्ष, पत्रकारिताको आदर्श र अनुशासनमा रहेर उपभोक्तालाई चासोको विषयमा आम जानकारी दिइरहेका छन् भने केहीले जानी वा नजानीकनै पनि तिनलाई उपेक्षा गरेर सर्वसाधारणलाई हानि पुऱ्याइरहेका छन् ।

आज केही पत्रकारहरू विभिन्न राजनीतिक दलका प्रवक्ता वा जनसम्पर्क अधिकारी जस्तो भएर समाचार प्रवाह गरिरहेका देखिन्छन् । हिट र लाइक बढाउने होडबाजीमा तिनले मानिसका आधारभूत सुरक्षा र संवेदनालाई बेवास्ता गरिरहेका छन् । पत्रकारिताको सदियौँको क्रमिक विकासले आर्जन गरेको जश र प्रतिष्ठालाई हाम्रै पुस्तादेखि देखिन थालेका केही विकृतिका बाछिटाले एक हदसम्म बदनाम तुल्याएको छ । आजका निष्ठावान् पत्रकार पुस्ताले यथाशक्य छिटो सत्य र सन्तुलित समाचारका साथै तिनको पूर्वाग्रहरहित पृष्ठभूमि र विश्लेषण प्रवाह गरेर सरोकारहरूमा पत्रकारिताप्रति आस्था र आदर बढाउने प्रयास गर्नुपर्छ ।

अन्त्यमा नेपाल पत्रकार महासंघ बेलायत शाखा स्थापनाको दशौँ वार्षिकोत्सवको अवसरमा बधाईका साथै यसको सार्थकता र सफलताका लागि हार्दिक शुभेच्छा व्यक्त गर्दछु । •

*(लेखक बीबीसी नेपाली सेवाका पूर्व प्रमुख हुन्।)*

> **"बेलायतमा आज नेपाली पत्रकारिता र सञ्चारमाध्यमहरुको उपस्थिति उल्लेखनीय र स्वागतयोग्य छ। यस विकास क्रमको शुरुवातमा केही उद्यमी, उत्साही र परिश्रमी युवाहरुको योगदान रहेको छ।"**

# वैदेशिक शाखा: पूर्व पत्रकारको नभएर वर्तमानकै संस्था बनाउनुपर्छ


रोसन पुरी

**नेपाल** पत्रकार महासंघ नेपाली पत्रकारको साझा छाता संस्था हो । महासंघ सबै विचार, समूह वा क्षेत्रका पत्रकारका लागि साझा घरका रूपमा रहँदै आएको छ । महासंघले स्थापनाकालदेखि नेपाली पत्रकारलाई संगठित गरी उनीहरूको पेशागत हकहित र श्रम अधिकारको संरक्षण तथा संवर्द्धन गर्दै प्रेस स्वतन्त्रताको रक्षा एवम् व्यावसायिक तथा जिम्मेवार पत्रकारिताको विकासका लागि नेतृत्वदायी भूमिका निर्वाह गर्दै आइरहेको छ । त्यस्तै महासंघले नागरिक अधिकार, अभिव्यक्ति स्वतन्त्रता र राष्ट्रिय हितका पक्षमा पनि निरन्तर आवाज उठाउँदै आएको छ ।

नेपाल पत्रकार महासंघको इतिहास नेपाली पत्रकारिताको इतिहाससँगै गौरवपूर्ण छ । महासंघको स्थापना कालदेखि अहिलेसम्म नेपालमा पत्रकार र सञ्चारमाध्यमको संख्यात्मक तथा गुणात्मक मात्र होइन, प्रविधि र पहुँच एवम् सामाजिक, आर्थिक तथा राजनीतिक लगायत सबै क्षेत्रमा व्यापक परिवर्तन भएको छ । परिवर्तनले पत्रकारितामा सिर्जना गरेका अवसरको उपभोग र चुनौतीको सामना गर्दै पत्रकार महासंघ अनवरत अघि बढिरहेको छ ।

निरन्तर क्रियाशील रहेको पहिलो नागरिक संस्थाका रूपमा नेपाल पत्रकार महासंघ स्थापित छ । नेपालमा वि.सं. २००८ सालमा श्रमजीवी पत्रकारको हितरक्षा गर्ने घोषित उद्देश्यले सत्यनारायणबहादुर श्रेष्ठको सभापतित्वमा नेपाल पत्रकार संघ गठन गरियो । उक्त संघले झण्डै दुई वर्षका बीच पत्रकारहरूको भेला, पत्रकारितासँग सम्बन्धित विभिन्न माग पेश गर्नेलगायतका गतिविधि गरेको थियो । सो संस्था निरन्तर सक्रिय नरहेको र वैधानिकता पूरा नगरेको आधारमा वि.सं. २०१२ सालमा कृष्णप्रसाद उपाध्याय भट्टराईको अध्यक्षतामा पुनर्गठित नेपाल पत्रकार संघको निरन्तरतामा हालको नेपाल पत्रकार महासंघ आजसम्म आइपुगेको छ ।

नेपाली पत्रकारिता क्षेत्रमा विकास हुँदै गएको विधागत पत्रकारिताको विकास र संरचनात्मक परिवर्तनको आवश्यकताका कारण नेपाल पत्रकार संघलाई वि.सं. २०५३ मा महासंघ बनाइयो भने महासंघको विधान २०६० को पहिलो संशोधन २०६४ अनुसार महासंघको प्रमुख पद सभापतिलाई अध्यक्ष भन्न थालियो । महासंघको विधानमा २०७४ सालमा भएको चौथो संशोधनसँगै यो संस्था संघीय संरचनामा गएको छ । ०७५ मा भएको पाँचौँ विधान संशोधनबाट महासंघका सबै तहको नेतृत्व प्रत्यक्ष निर्वाचन प्रणालीमार्फत साधारण सदस्यहरूबाटै चुनिने व्यवस्था हुनुका साथै महासंघलाई थप समावेशी र ट्रेड यूनियन अधिकारप्राप्त संस्थाका रूपमा स्थापित गरिएको छ ।

पत्रकारिता क्षेत्रमात्रै होइन नेपालको राजनीतिक परिवर्तनसँगै नेपाल पत्रकार महासंघको भूमिका अग्रभागमा देख्न सकिन्छ । विगतमा संघसंस्था दर्ता ऐनअनुसार दर्ता भएर गैरसरकारी संस्थाको कानूनी हैसियतमा रहेको महासंघ हाल राष्ट्रिय निर्देशन ऐन, २०१८ अनुसार नेपाली व्यावसायिक पत्रकारहरूको साझा छाता संस्थाको रूपमा स्थापित छ । मुलुकमा लोकतन्त्र र नागरिक अधिकारका लागि उठेका आवाजहरूमा विचार तथा अभिव्यक्ति स्वतन्त्रताको आवाज लिएर नागरिक समाजको अगुवाको पहिचान पनि महासंघले बनाएको छ ।

पत्रकारहरूको श्रम अधिकारका लागि महासंघ अनवरतरूपमा सक्रिय रहेको छ । महासंघकै कतिपय सदस्यहरू ट्रेड यूनियनका पनि सदस्य भएको र महासंघ आफैंमा ट्रेड यूनियनका रूपमा कार्यरत अन्तरराष्ट्रिय पत्रकार महासंघ (आइएफजे)को सदस्य पनि रहेकाले यसको ट्रेड यूनियनको स्पष्ट पहिचान बनिसकेको छ । अहिलेसम्मको अभ्यासले महासंघ ट्रेड यूनियन अधिकारसहितको नागरिक अगुवा संस्थाको रूपमा स्थापित बनेको छ । यसले पत्रकारको

> "वैदेशिक शाखालाई महासंघको विधानअनुरुप बनाउन र व्यक्ति तथा समूहको प्रभावबाट मुक्त राख्नु अहिलेको ठूलो चुनौती बनेको छ । त्यसका लागि विधान अधिवेशनमा वैदेशिक शाखाको संरचना पनि शाखा समितिअनुसार को बनाउने प्रस्ताव लैजाने तयारी गरिएको छ ।"

मात्रै नभएर आमनागरिकको अधिकारका विषयमा पनि आवाज उठाउँदै आएको छ ।

**राजनीतिक आन्दोलन र नागरिकसँगै महासंघ**

नेपाल पत्रकार महासंघ नेपालको राजनीतिक परिवर्तनको आन्दोलनमा आमनागरिकसँगै छ । आमनागरिकको अधिकारको पक्षमा महासंघ निरन्तर क्रियाशील बनेको छ । महासंघको विधानमै 'प्रेस स्वतन्त्रताको रक्षा गर्दै स्वच्छ, व्यावसायिक र जिम्मेवार पत्रकारिताको विकासका लागि नेपालमा कार्यरत पत्रकारलाई संगठित गरी उनीहरूको पेशागत हकहितको संरक्षण र संवर्द्धनका लागि सूचनाको हक र विचार तथा अभिव्यक्ति स्वतन्त्रतालगायतका नागरिक अधिकारलाई आत्मसात गर्दै संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमद्वारा राष्ट्रको बृहत्तर हितका निम्ति पारदर्शी र न्यायपूर्ण समाजको विकास गर्ने' अभीष्टसहित नेपाल पत्रकार महासंघ सक्रिय रहेको छ' उल्लेख गरिएको छ ।

महासंघको विधानले प्रस्तावनामा नै नेपाल पत्रकार महासंघको संगठनात्मक संरचना, स्थापना र सञ्चालन गर्दा समेत अन्तरराष्ट्रिय जगत्मा पत्रकारिता क्षेत्रमा क्रियाशील संघ, संस्था तथा व्यक्तिहरूसँग सौहार्दपूर्ण सम्बन्ध कायम गर्ने सिद्धान्त स्वीकार गरिएको छ । पत्रकारहरूको संगठन, हकअधिकार, सुरक्षा, सक्रियताका साथै पत्रकारिताको व्यावसायिक अभ्यास तथा आचरण र राष्ट्र, समाज तथा नागरिकका स्वतन्त्रतासँग सम्बन्धित ती उद्देश्य प्राप्तिका लागि महासंघ सक्रिय छ ।

महासंघले नेपाली पत्रकारहरूलाई संगठित गरी व्यावसायिक नेतृत्व प्रदान गर्दै उनीहरूको हक अधिकार प्रवर्द्धन तथा संरक्षण गर्न क्रियाशील रहने, उत्तरदायी, मर्यादित र जिम्मेवार पत्रकारिताको संस्थागत विकासमा क्रियाशील हुँदै स्वतन्त्र प्रेसको विश्वव्यापी मर्म, मान्यता, आचरण र आदर्शलाई परिपालना गर्ने, सूचनाको हक र विचार तथा अभिव्यक्ति स्वतन्त्रताको पक्षमा क्रियाशील रहने, श्रमजीवी पत्रकारहरूको उचित श्रम अभ्यास, सामूहिक सौदाबाजी र पेशा तथा रोजगारीको अधिकारको संरक्षणका लागि पत्रकार महासंघलाई ट्रेड यूनियन संस्थाका रूपमा स्थापित गरी ट्रेड यूनियन अधिकारको नेतृत्व प्रदान गर्ने उद्देश्य बोकेको छ ।

महासंघको विधानअनुसार पत्रकार तथा आमसञ्चारमाध्यमको व्यावसायिक हकहित र भौतिक सुरक्षाका लागि सक्रिय रहने, पत्रकारिता क्षेत्रसँग सम्बन्धित राष्ट्रिय र अन्तरराष्ट्रिय क्षेत्रमा क्रियाशील संघ संस्थाहरूसँग सम्बन्ध विस्तार गर्ने तथा विभिन्न देशका संघ, संस्थाहरूसँग प्रतिनिधिहरू आदानप्रदान गर्ने, पत्रकारिता क्षेत्रसँग सम्बन्धित विषयहरूमा बैठक, भेला, सभा, सम्मेलन, गोष्ठी, अन्तरसंवाद, प्रशिक्षणलगायत अन्य विभिन्न रचनात्मक गतिविधि सञ्चालन गर्ने र पुस्तक, पत्रपत्रिका, कार्यक्रम तथा प्रतिवेदन प्रकाशन वा उत्पादन गर्ने, राष्ट्र, समाज र आमनागरिक तथा पत्रकार जगत्को हितका साथै स्वच्छ पत्रकारिताको प्रवर्द्धनका निम्ति क्रियाशील रहने र प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको रक्षा र प्रवर्द्धनका लागि आवश्यक अन्य काम गर्ने महासंघका प्राथमिकता हुन् ।

**महासंघको सांगठनिक संरचना**

नेपाल पत्रकार महासंघको विधानमा तीन तहका संरचना परिकल्पना गरिएको छ । केन्द्रीय समिति, प्रदेश समिति र शाखा समितिको अवधारणा लागू गरिएको छ । नेपाल पत्रकार महासंघमा अहिले १३ हजार १७४ जना सदस्य छन् । ७६ जिल्ला शाखा, ३९ प्रतिष्ठान शाखा, १२ एशोसिएट संस्था महासंघका अभिन्न अंग हुन् । महासंघसँग प्रादेशिक समिति ७ सहित उपत्यका, प्रतिष्ठान र एशोसिएट प्रदेश गरी १० प्रदेश क्रियाशील छन् । महासंघको विधान तथा वैदेशिक शाखा सञ्चालन नियमावलीअनुसार विभिन्न ११ वैदेशिक शाखा सक्रिय छन् । यी शाखाका सदस्य संख्या २३६ रहेको छ । पछिल्ला दुई शाखाको मान्यताप्राप्त गरेका बेल्जियम र पोर्चुगलमध्ये बेल्जियमले हालैमात्र सदस्यता विवरण उपलब्ध गराएको छ ।

विदेशमा रहेका महासंघका शाखाहरू निकै सक्रिय छन् । तीमध्ये बेलायत शाखा अग्रमोर्चामा पर्छ । नेपाली पत्रकारहरू समस्यामा पर्दा महासंघसँग हातेमालो गरेर बेलायत शाखाले विगतदेखि वर्तमानसम्म गरेको सहकार्य सम्झन लायक छ । विदेशमा शाखामात्रै नभएर नेपाली पत्रकारहरू आबद्ध अमेरिकास्थित नेपाली पत्रकारहरूको साझा संस्था नेजा र अष्ट्रेलियास्थित एन्जा पनि महासंघसँग हातेमालो गरेर क्रियाशील बनेका छन् । पत्रकार र पत्रकारिता क्षेत्रको विकासका लागि यी दुई संस्थासँग पनि महासंघले मिलेर काम गरिरहेको छ । अन्य देशमा पनि यस्तै प्रकारले विभिन्न संस्थामार्फत नेपाली पत्रकारहरू महासंघमा जोडिने तयारीमा छन् । त्यसका लागि महासंघलाई विभिन्न प्रकारले प्रस्ताव प्राप्त भएका छन् । विदेशमा रहेका शाखाहरूमा पछिल्लो समय नेपालमा जस्तै वैचारिक तथा व्यक्तिगत समूह, उपसमूहका कारण समस्या निम्तिन थालेको छ ।

शुद्धीकरणलगायतका विषय विदेश शाखामा पनि उठ्न थालेका छन् । नेपालमा सक्रिय शाखाका सदस्यमात्र नभएर वैदेशिक शाखामा आबद्ध सदस्यहरू पनि गैरपत्रकार भएको गुनासो पटक पटक आउने गरेको छ । नेपाल पत्रकार महासंघको लामो समयदेखिको विषय शुद्धीकरण पनि हो । हरेक अधिवेशनमा हामीले महासंघ र समग्र पत्रकारिताको शुद्धीकरणको कुरा उठाउँदै आएका छौँ । नेपाली पत्रकारितालाई स्वच्छ, मर्यादित र उत्तरदायी बनाउनका लागि महासंघभित्र र पत्रकारिता क्षेत्रमै शुद्धीकरणको आवश्यकता छ तर व्यवहारमा अधिवेशनको अन्त्यतर्फ एकखाले भागबण्डा जस्तो गरी थपिने सदस्यका कारण शुद्धीकरणको पाटो ओझेलमा पर्दै आएको छ ।

वैदेशिक शाखालाई महासंघको विधानअनुरूप बनाउन र व्यक्ति तथा समूहको प्रभावबाट मुक्त राख्नु अहिलेको ठूलो चुनौती बनेको छ । त्यसका लागि विधान अधिवेशनमा वैदेशिक शाखाको संरचना पनि शाखा समितिअनुसारको बनाउने प्रस्ताव लैजाने तयारी गरिएको छ । वैदेशिक शाखालाई पूर्व पत्रकारको भन्दा पनि वर्तमानकै पत्रकारको सक्रिय संस्थाको रूपमा स्थापित गर्ने गरी छलफल प्रारम्भ भइसकेको छ । वैदेशिक शाखालाई थप प्रभावकारी, व्यवस्थित र पारदर्शी बनाउनका लागि केन्द्रले मात्रै नभएर शाखा तथा शाखामा आबद्ध हरेक सदस्यको उत्तिकै जिम्मेवारी हुन आउँछ । ●

*(लेखक नेपाल पत्रकार महासंघका केन्द्रिय महासचिव हुन् ।)*



भगीरथ योगी

# नेपालबाहिर नेपाली पत्रकारिता

“हामीले सर्वेक्षण गरेकामध्ये ७५ प्रतिशत अनलाइन पोर्टलहरुले स्व-लगानीमा पोर्टल शुरु गरेको र कुनै संस्थागत लगानी नभएको जनाए । त्यस्तै ३५ प्रतिशतले आफूहरु घाटामा चलिरहेको जनाए । यसरी अधिकांश अनलाइन पोर्टलहरु व्यावसायिकभन्दा पनि स्वयंसेवी रुपमा सञ्चालन भइरहेका पाइयो ।”

**नेपाल बाहिर नेपाली पत्रकारिता**

'गोर्खा भारत जीवन'लाई भारतमा छापिएको पहिलो नेपाली पत्रिका भनिएको छ, तर त्यसको मिति खुलेको छैन । बीएफबीएस गोर्खा रेडियो सन् १९५२ देखि सिंगापुरबाट प्रसारण शुरू भएको थियो । अहिले बेलायतबाटै प्रसारण भइरहेको छ । बेलायतमा यती एसोसियसनले आफ्नो मुखपत्रको रूपमा सन् १९६० मा 'यतीपत्र' प्रकाशन गरेको इतिहास छ । बीबीसी नेपाली सेवाले सन् १९६९ देखि नेपाली सेवामा आफ्नो प्रसारण शुरू गरेको हो, तर अहिले आएर उसले आफ्नो रेडियो प्रसारणमा व्यापक कटौती गरेको छ र मल्टीमिडिया कन्टेन्टमा जोड दिइरहेको छ । सन् १९९३ मा अमेरिकाबाट 'द नेपाल डाइजेष्ट' को प्रकाशन शुरू गरियो । अरू मुलुकमा नेपाली पत्रकारिताको इतिहासबारे थप अनुसन्धानको खाँचो छ ।

**प्रेस स्वतन्त्रताको अवस्था**

प्रेस स्वतन्त्रताको अवस्थाको कुरा गर्दा खासै अध्ययन भएको पाइँदैन । युरोप, अमेरिका, अष्ट्रेलिया, जापान लगायतका प्रजातान्त्रिक मुलुकहरूमा प्रवासी मिडियाले स्वतन्त्रपूर्वक आफ्नो भनाइ प्रस्तुत गरेको पाइन्छ । नेपाली भाषामा प्रकाशित सामग्रीलाई त्यहाँका सरकारहरूले खासै अनुगमन गरेको पाइँदैन ।

खासगरी खाडी मुलुकहरूमा चाहिँ नेपाली पत्रकारिताले प्रत्यक्ष वा परोक्ष स्वनियन्त्रण (सेल्फ सेन्सरशीप) व्यहोर्नु परिरहेको छ । उदाहरणका लागि कान्तिपुर दैनिकको कतार संस्करण २००७ डिसेम्बरदेखि शुरू भएर २०१६ जुलाईसम्म साप्ताहिक रूपमा प्रकाशित भएको थियो । उक्त प्रकाशन छाप्नु भन्दा पहिले कतारको कला तथा संस्कृति विभागमा लगेर देखाएर उनीहरूले स्वीकृत गरेपछि मात्रै छाप्न पठाउने गरेको कतारमा काम गरिसक्नु भएका कान्तिपुरकै एकजना पत्रकारले बताउनु भयो ।

त्यस्तै गत १५ फेब्रुअरी २०२२ मा पक्राउ परेका युएईमा कार्यरत नेपाली पत्रकार उमाकान्त पाण्डे भर्खरै जेलबाट छुट्नु भएको छ । युएईको एक अदालतले पत्रकार पाण्डेलाई तीन महिना जेल, २० हजार दिराम जरिवाना, नेपाल डिपोर्ट लगायतको सजाय सुनाएको थियो । युएईका राजकुमारले पाण्डेको सजाय माफ गरिदिएको भन्ने समाचार आएको थियो । यो एउटा प्रतिनिधि घटना हो र खासगरी खाडी मुलुकमा काम गर्ने नेपाली पत्रकारहरूले के कस्ता चुनौती भोग्नु परिरहेको छ भन्ने एउटा उदाहरण पनि ।

**व्यवसायिकताको सवाल**

जहाँसम्म व्यवसायिकताको कुरा छ, हामीले पहिले प्रवासमा नेपाली सञ्चारमाध्यमहरू कसरी प्रकाशित भइरहेका छन् भनेर हेर्नुपर्छ । सन् २०२० मा डा. जगन कार्की र मैले प्रवासबाट प्रकाशित हुने ४० भन्दा बढी नेपाली अनलाइन पत्रिकाहरूसँग सम्पर्क गरेर एउटा सर्वेक्षण गरेका थियौं । त्यसमा अधिकांश पत्रकारहरू आफैं सम्पादक, आफैं प्रकाशक भएको र संस्थागत लगानी नरहेको पाइयो । यसले गर्दा व्यावसायिक रूपमा काम गर्न पनि चुनौतीपूर्ण रह्यो । त्यो अध्ययन 'Global Perspectives on Journalism in Nepal' पुस्तकको च्याप्टरको रूपमा पनि प्रकाशित भएको छ । उक्त पुस्तकका सम्पादक डा. भानुभक्त आचार्य र डा. श्याम शर्मा हुनुहुन्छ ।

हामीले सर्वेक्षण गरेकामध्ये ७३ प्रतिशतभन्दा बढी अनलाइन पोर्टलहरूले आफूहरूले प्रेस काउन्सिल नेपालको आचारसंहिता पालना गर्ने गरेको जनाए । यद्यपि उक्त आचारसंहिता नेपालमा दर्ता भएका सञ्चारमाध्यमहरूलाई मात्रै लागू हुन्छ, प्रवासमा सञ्चालित नेपाली मिडियालाई होइन । त्यस्तै ३० प्रतिशतले मात्रै आफूहरूले व्यवसायिकता कायम गर्न

सकेको स्वीकार गरे । हामीले नजिकबाट अध्ययन गरेका १० ओटा अनलाइन पोर्टलहरूमध्ये धेरैले नेपालसँग सम्बन्धित समाचारहरूलाई प्राथमिकता दिएको पाइयो । अधिकांश अनलाइन पोर्टलहरू नेपाली भाषामा प्रकाशित भइरहेका छन् भने १,२ वटाले मात्र आफू प्रकाशित हुने मुलुकको भाषामा पनि प्रकाशन गर्ने गरेको पाइयो । स्रोत नखोलेरै समाचार र फोटोहरू छाप्ने गरेको पनि पाइयो ।

अधिकांश अनलाइन पोर्टलहरू नेपाली भाषामा प्रकाशित भइरहेकाले उनीहरू विज्ञापनका लागि पनि नेपाली समुदायमै निर्भर छन् । उनीहरूले जुन मुलुकमा सञ्चारमाध्यमहरू क्रियाशील रहेको हो, त्यहाँका स्थानीय निकाय वा व्यवसायबाट विज्ञापन पाउन नसकेको देखियो । पत्रपत्रिका छापिने र ग्राहकले वार्षिक शुल्क तिरेर पढ्ने प्रचलन निकै कम भएकाले पनि अनलाइन पत्रिकाहरूले आम्दानीका नयाँ स्रोतहरू खोज्नुपर्ने देखियो ।

हामीले सर्वेक्षण गरेकामध्ये ७५ प्रतिशत अनलाइन पोर्टलहरूले स्व-लगानीमा पोर्टल शुरू गरेको र कुनै संस्थागत लगानी नभएको जनाए । त्यस्तै ३५ प्रतिशतले आफूहरू घाटामा चलिरहेको जनाए । यसरी अधिकांश अनलाइन पोर्टलहरू व्यावसायिकभन्दा पनि स्वयंसेवी रूपमा सञ्चालन भइरहेका पाइयो । केही अनलाइन पोर्टलहरूले राम्रै आम्दानी गर्नुका साथै नेपालमा पनि टिम राखेर काम गरिरहेका छन् । तर अधिकांश अनलाइन पोर्टलहरूले मुनाफा कमाउनुभन्दा पनि आफू बसेको समुदायमा पत्रकारको रूपमा चिनिने र सामाजिक पहिचान कायम गर्ने उद्देश्यले नै सञ्चालन गरिरहेको पाइयो ।

अनलाइन पोर्टलहरू सम्पादकीय स्वतन्त्रतामा आँच नआउने गरी व्यावसायिक लगानीको मोडलमा जान आवश्यक देखिन्छ । त्यस्तै विचार मिल्ने अनलाइन पोर्टलहरूलाई आपसमा सहकार्य गर्न पनि हामीले सुझाव दिएका छौं । सकभर 'मर्जर गरौँ, त्यो सम्भव छैन भने 'कन्टेन्ट शेयर' गरौँ र विज्ञापन बाहेक अरू केहि 'रेभेन्यु मोडल' हुन सक्छ



भने त्यो पनि खोजी गरौँ भन्ने हामीले सुझाव दिएका छौं ।

प्रवासमा नेपाली पत्रकारिता अहिले पनि बाँच्नकै लागि संघर्ष गरिरहेको छ । त्यसैले विश्वसनीयता र व्यवसायिकताको क्षेत्रमा थप सामूहिक प्रयास गर्न बाँकी नै छ । ●

*(लेखक शाखाका सल्लाहकार एवम् बीबीसीका पूर्व पत्रकार हुन्।)*

# पत्रकार महासंघ बेलायतको अबको बाटो


ध्रुवराज अर्याल

**नेपाली** पत्रकारहरूको प्रतिनिधि संगठन नेपाल पत्रकार महासंघको बेलायत शाखाले आफ्नो स्थापनाका दशौँ वर्ष पूरा गरेको छ । शाखाको यो ऐतिहासिक एक दशक लामो यात्राले यसमा आबद्ध हामी सबै सदस्यहरूमा ठूलो गौरव र उत्साह सञ्चार गराएको छ ।

संगठन स्थापनाको दशौँ वार्षिकीलाई एक उत्सवका रूपमा मनाइरहँदा यसको विगतलाई समीक्षा गर्दै भावी यात्राको मार्गलाई थप स्पष्ट बनाउन सक्नुपर्ने चुनौती आज हामीलाई महसुस भएको छ । संगठन स्थापनाताका राखिएका लक्ष्यअनुसार जे जति उपलब्धि हासिल भए, त्यसमा खुशी मनाउने मात्र नभई बाँकी कामप्रतिको हाम्रो प्रतिबद्धता र अठोटलाई पुनर्ताजगी गर्ने अवसरका रूपमा पनि यो दशौँ वार्षिकोत्सवलाई हामीले लिनुपर्नेछ ।

बेलायतमा रहेका नेपाली पत्रकारहरूलाई संगठित गर्ने र उनीहरूसँगै यहाँबाट सञ्चालित नेपाली मिडिया समेतको स्तरोन्नति गर्ने मूल लक्ष्य बोकेर शाखा स्थापना भएको थियो । अहिले पनि पत्रकारितामा सक्रिय रहेका, विगतमा पत्रकारिता गरेर अहिले निष्क्रिय रहेकादेखि पत्रकारिताप्रति आकर्षित नयाँ साथीहरूसम्मलाई एकै मञ्चमा जम्मा पार्ने संस्थाको प्रयास सफल भएको छ ।

बेलायतस्थित नेपाली पत्रकारहरूको सीप तथा क्षमता अभिवृद्धि गराउन विभिन्न समयमा फरक-फरक खालका तालिम, प्रशिक्षण, गोष्ठी, भ्रमण लगायतका उपयोगी कार्यक्रम निकै प्रभावकारी बनेका छन् । एनआरएनएसँगको सहकार्यमा शाखाले स्थापना गरेको एनआरएनए अन्तरराष्ट्रिय पत्रकारिता पुरस्कारदेखि बेलायतकै नेपाली पत्रकारलाई वार्षिक रूपमा प्रदान गरिने 'एफएनजे यूके वर्ष पत्रकारिता पुरस्कार'ले पनि नेपाल र डायस्पोरा दुवै क्षेत्रमा सक्रिय नेपाली पत्रकारलाई प्रोत्साहन गर्दै आएको छ ।

बेलायतमा पत्रकार महासंघको शाखा खुलेपछि पुराना पत्रकारहरू मात्र जोडिन आएका छैनन्, नयाँ पत्रकार पनि जन्मिने वातावरण तयार भएको छ । पत्रकार महासंघजस्तो इतिहास बोकेको गौरवशाली संस्थाको सदस्यता आफैंमा प्रतिष्ठा बनेको छ । त्यसमाथि बेलायतस्थित नेपाली समुदायमा पत्रकार भन्नु नै पत्रकार महासंघको सदस्य भन्ने खालको बुझाइ बनेको छ, त्यसलाई पनि संस्थाको उपलब्धिकै रूपमा हेरिनुपर्छ ।

पत्रकारितामा रूचि राख्ने, सिक्न खोज्ने नयाँ साथीहरूलाई शाखाले प्रेरणासँगै विभिन्न अभिमुखीकरण कार्यक्रममार्फत सहयोग पनि पुऱ्याइरहेको छ । शाखा स्थापनायताका एक दशकलाई फर्केर हेर्दा शाखा पत्रकारहरूको पेशागत संगठनमा मात्र सीमित भने छैन । बेलायतको नेपाली समुदायभित्रको एक सशक्त सामाजिक संस्थाकै रूपमा आफ्नो सक्रिय भूमिका निर्वाह गर्न सधैं अग्रसर रहँदै आएको छ ।

नेपालमा विभिन्न समस्यामा परेका सहकर्मी पत्रकारहरूलाई सहयोगका साथै भूकम्प, कोभिड महामारीजस्ता आपत्विपत्का वेला बेलायतमा सहयोग जुटाएर नेपालसम्म पुऱ्याउने काम शाखाले गरेको छ । कोभिड महामारीपछि मात्रै पनि झन्डै ३० लाख रूपैयाँको सहयोग नेपाल पठाइएको छ । त्यसो त खर्चको अभावमा उपचार नपाएका नेपालस्थित कैयौं पत्रकार साथीहरूको उपचारका लागि पनि शाखाकै पहलमा बेलायतबाट सहयोग पठाइएको छ ।

नेपाल पत्रकार महासंघको बेलायत शाखा स्थापनादेखि आजको अवस्थामा ल्याइ पुऱ्याउनसम्म बेलायतको नेपाली समुदायले ठूलो भूमिका निर्वाह गरेको छ । समुदायकै काखमा जन्मिएर उसकै संरक्षणमा हुर्किएको शाखा अब भने यही समुदायलाई गाह्रोसाह्रो पर्दा काँध थाप्ने सहयोगी समेत बन्न पुगेको महसुस हुन थालेको छ ।

"समुदायकै काखमा जन्मिएर उसकै संरक्षणमा हुर्किएको शाखा अब भने यही समुदायलाई गाह्रोसाह्रो पर्दा काँध थाप्ने सहयोगी समेत बन्न पुगेको महसुस हुन थालेको छ।"

पछिल्लो समय कोभिड महामारीले आक्रान्त पारेका वेला बेलायतवासी नेपालीहरूलाई स्वास्थ्यसम्बन्धी सचेतना जगाउनेदेखि विभिन्न डाक्टर, नर्स, जनस्वास्थ्यविज्ञहरूलाई ल्याएर समुदायका सदस्यहरूसँग सिधा प्रश्नोत्तरमार्फत स्वास्थ्य परामर्श उपलब्ध गराइयो । त्यसअघि महासंघकै आह्वानमा बेलायतभरका नेपाली सञ्चारमाध्यम मार्फत महामारीकेन्द्रित स्वास्थ्य सम्बन्धी जानकारी र विज्ञहरूका सल्लाह, परामर्शलाई प्रकाशन, प्रसारण गऱ्यौं ।

हाम्रो समुदाय र मिडियाबीचको दूरी सकेजति कम गर्दै जाने प्रयास शाखाले निरन्तर गर्दै आएको छ । मिडियाप्रतिका समुदायका धारणा, अपेक्षा र गुनासा संकलन गर्न शाखाले बेलायतका विभिन्न क्षेत्रस्थित नेपालीहरूमाझ पुगेर नियमित अन्तरसंवाद गर्ने गरेको छ । केही महिनाअघि मात्रै शाखाले बेलायतभरका नेपाली संघसंस्थाका प्रतिनिधि निम्त्याएर प्रेस रिलिज कार्यशाला सञ्चालन गऱ्यो । समुदायको चाहना र आवश्यकता बुझ्ने र त्यसलाई मिडियाका प्लाटफर्महरूद्वारा सम्बोधन गर्ने प्रयत्न प्रभावकारी भएको हाम्रो अनुभव छ ।

पत्रकार महासंघको बेलायत शाखाले बेलायतमा जसरी ठूलो संख्यामा नेपाली पत्रकारहरू जन्माएको छ, त्यो आफैंमा सुखद कुरा हो । तर अब पत्रकारको संख्या मात्र नभई उनीहरूको गुणस्तर पनि बढाउनुपर्ने आवश्यकता देखिएको छ ।

पत्रकार महासंघको सदस्यताप्रति यहाँको समुदायमा देखिएको आकर्षण संस्थाको सफलता र प्रतिष्ठाको एक सूचक हो । तर त्यही आकर्षणलाई समुचित व्यवस्थापन गर्न नसके त्यसले नकारात्मक असरहरू पनि निम्त्याउन सक्छ भन्ने पाठ हामीले आनै विगतबाट पनि सिक्न जरूरी छ ।

> **“संस्था स्थापनाका शुरुवाती वर्षहरुमा धेरै पत्रकार संगठित गर्नु, सदस्यता बढाउनु नै पनि सफलता थियो तर अब संस्थामा संगठित भइसकेकाहरुको सीप-क्षमता बढाउनु र उनीहरुलाई जिम्मेवार एवम् मर्यादित पत्रकारितातर्फ उत्साहित गर्नु हाम्रो ठूलो जिम्मेवारी बनेको छ।”**

संस्था स्थापनाका शुरुवाती वर्षहरुमा धेरै पत्रकार संगठित गर्नु, सदस्यता बढाउनु नै पनि सफलता थियो तर अब संस्थामा संगठित भइसकेकाहरूको सीप-क्षमता बढाउनु र उनीहरूलाई जिम्मेवार एवम् मर्यादित पत्रकारितातर्फ उत्साहित गर्नु हाम्रो ठूलो जिम्मेवारी बनेको छ ।

बेलायत शाखाले महासंघको केन्द्र र नेपालस्थित पत्रकारहरूसँग मिलेर गर्न सक्ने धेरै काम छन् । बेलायतजस्तो मिडियामा संसारकै उच्चतम विकास र अभ्यास भएको मुलुकमा हुनुको अवसरले पनि हामीलाई झन् बढी कर्तव्यबोध गराएको छ । शाखाले नेपाल तथा बेलायतको मिडिया क्षेत्रबीच पुलको काम गर्दै सीप हस्तान्तरण, अनुभव आदानप्रदान, अध्ययन, प्रशिक्षण, भ्रमण लगायतका थुप्रै कार्यक्रम प्राथमिकतापूर्वक अघि बढाउनुपर्नेछ ।



पाँचौं अधिवेशनबाट निर्वाचित कार्यसमिति- सन् २०२१।

पत्रकार महासंघका अन्य शाखाहरूलाई जस्तै विशुद्ध पेशागत संगठनमा सीमित रहने सुविधा बेलायत शाखालाई छैन । आफ्नो सदस्यहरूको संगठन, संरक्षण, सीप-क्षमता अभिवृद्धि जस्ता मुद्दामा मात्रै केन्द्रित बनेर हामीलाई पुग्दैन । बेलायतमा सञ्चालित नेपाली मिडियालाई दिगो बनाउन, समुदायको आवाजलाई सही र पर्याप्त ढंगले मिडियामा पुऱ्याउन पनि हाम्रो भूमिकाको अपेक्षा छ ।

अहिलेसम्म लगभग पहिलो पुस्ताले धानेको यहाँको नेपाली पत्रकारिताको निरन्तरताको जिम्मा नयाँ पुस्तालाई हस्तान्तरण गर्न जरूरी छ । जसका लागि तन्नेरी पुस्तालाई पत्रकारितातर्फ आकर्षित गर्न र उनीहरू सक्रिय रहन सक्ने वातावरण सिर्जना गर्नु हाम्रो दायित्व हो ।

एक दशकको बिन्दुमा उभिएर पछाडि फर्किंदा शाखाले गौरव गर्न सक्ने धेरै ठाउँ देखिन्छन् । बेलायतमा रहेका नेपाली पत्रकार, मिडिया र समुदायको हितमा शाखाको माध्यमबाट जे जति कार्य भएका छन्, ती साँच्चिकै गौरवयोग्य छन् । तर पत्रकारहरूको क्षमता अभिवृद्धि, मिडियाको व्यवसायीकरण तथा गुणस्तर विकास र समुदायको आवश्यकताअनुरूपको आवाज बोल्ने जस्ता कार्यमा उक्लनुपर्ने सिँढी धेरै बाँकी छन् ।

बेलायतमा रहेका नेपाली पत्रकारहरूलाई क्रियाशील र व्यावसायिक बनाउने, पत्रकारितालाई मर्यादित र जिम्मेवार बनाउने तथा यहाँबाट सञ्चालित नेपाली मिडियालाई गुणस्तरीय र दिगो बनाउने जस्ता कार्य हाम्रा लागि अबका दिनका चुनौती हुन् । यिनै कार्यमा प्रभावशाली भूमिका निर्वाह गर्न सके मात्र बेलायतमा नेपाल पत्रकार महासंघको औचित्य पुष्टि हुनेछ । ●

*(लेखक शाखाका वर्तमान अध्यक्ष हुन् ।)*

# छोटो समयमा महत्वपूर्ण उपलब्धि

**पत्रकारिता** त्यस्तो पेशा हो जसले सत्य उजागर गर्दै विश्वसनीयता र इमान्दारी अँगालेको हुन्छ । थोमस कार्लीले चौथो अंगको उपमा दिएसँगै पत्रकारिता पेशा नागरिकको प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको अधिकारसँग जोडिन पुग्यो । सन् १७८७ तिर ग्रेट ब्रिटेनमा चौथो अंगको उपाधि पाएको पत्रकारिता पेशा राज्यका तीनवटा अंग (व्यवस्थापिका, कार्यपालिका र न्यायपालिका) सञ्चालन तथा उनीहरूमाथि निगरानी राख्ने एक स्वतन्त्र निकायका रूपमा विश्वभर स्थापित छ ।

नेपालमा जंगबहादुरले भित्र्याएको गिद्धे प्रेस हुँदै अहिलेको डिजिटल युगसम्म आइपुग्दा नेपाली पत्रकारहरूको छाता संगठन 'नेपाल पत्रकार महासंघ' ले छ दशक पार गरिसकेको छ । नेपाल पत्रकार संघको रूपमा १९५६ मा स्थापित यस संस्थालाई सन् १९९५ मा पत्रकार महासंघ नामकरण गरियो । पत्रकारहरूलाई संगठित गरी व्यावसायिक नेतृत्व प्रदान गर्दै उनीहरूको हक, अधिकार प्रवर्धनमा कटिबद्ध महासंघको विदेशमा स्थापितमध्ये बेलायत शाखा अग्रस्थानमा छ ।

सन् २०११ मा विधिवत् रूपमा स्थापना भएको बेलायत शाखाले एक दशक पार गरिसकेको छ । यस अवधिमा चारवटा नेतृत्वले सफलतापूर्वक आफ्नो जिम्मेवार पूरा गरिसकेका छन् भने गतवर्ष सन् २०२१ मा निर्वाचित पाँचौं कार्यसमितिले तीनवर्षे कार्यकालको जिम्मेवारी लिएको छ । सत्य तथ्य घटनामा आधारित रही सञ्चारमाध्यमबाट यहाँस्थित नेपाली समुदायलाई विभिन्न जानकारी उपलब्ध गराउँदै आएको बेलायत शाखामा ४३ जना सदस्य छन् । तीमध्ये कतिपय नेपालका प्रायः राष्ट्रिय मिडियामा समेत आबद्ध छन् ।

विभिन्न समस्या र चुनौतीसँग लड्दै स्थापनाकालको दश वर्ष पूरा गर्नु चानचुने विषय होइन । शाखालाई गतिशील प्रदान गर्दै यहाँसम्म ल्याइपुर्‍याउन बेलायतस्थित नेपाली समुदायको ठूलो हात छ । दशवर्षे यात्रामा समुदायको साथ र सहयोगविना संस्था सञ्चालन पक्कै सम्भव थिएन । अहिले हामी १० जुलाई २०२२ लाई एक ऐतिहासिक दिनको रूपमा घोषणा गर्दै स्थापना दिवस एवं दशौं वार्षिकोत्सव मनाउने तयारीमा छौं । बेलायतस्थित विभिन्न संघसंस्था, नेपाली समाज, व्यवसायी, बौद्धिक व्यक्तित्वलगायतको सहकार्यले नै हाम्रो दशवर्षे यात्रा सम्भव भएकोमा दुई मत छैन । सबैभन्दा पुरानो नेपाली संस्था यतीले हप्ता दिन पुरानो गोरखापत्रका कटिङलाई फोटोकपी गरेर सीमित संख्यामा वितरण गरेर शुरूवात गरेको बेलायतमा नेपाली पत्रकारिता अहिले डिजिटल माध्यमको रूपमा सबैको हातमा र सबैको साथमा पुगेको छ ।



नरेन्द्र बस्नेत

> "नेपाली कला, संस्कृति, भाषा, धर्म, वेषभूषा र परम्परा जगेर्ना गर्न मिडियाको पनि महत्वपूर्ण भूमिका रहेको हुँदा नेपाली समाजका हरेक गतिविधिमा पत्रकार महासंघ यूकेले हातेमालो गर्दै आएको छ ।"

### पाँचौं कार्यसमिति र यसका गतिविधि

गत वर्ष १३ जुन २०२१ मा सम्पन्न शाखाको पाँचौं अधिवेशनले ध्रुवराज अर्यालको नेतृत्वमा कार्यसमिति चयन गरेको थियो । कोभिड १९ महामारी केही मत्थर भएको अवसर पारेर शाखाले पहिलोपल्ट पोष्टल भोटमार्फत नेतृत्व चयन गरेको हो ।

कोभिड महामारीका कारण विश्व नै आतंकित बनिरहेका वेला गठित कार्यसमितिलाई कुनै पनि प्रकारका गतिविधि एवम् क्रियाकलाप सञ्चालनमा त्यति सहज थिएन । समय र परिस्थितिअनुसार भर्चुअल रूपमा भए पनि आवश्यक सचेतना, सूचना एवम् जानकारी प्रवाह गर्ने काम निरन्तर रह्यो । तत्कालीन अवस्थालाई मद्देनजर गर्दै कोभिड सम्बन्धी समस्यालाई नै प्रमुख एजेन्डा बनाएर अघि बढ्ने निधो गरियो । कोभिडका कारण हरेक क्षेत्र प्रभावित बनिरहेको अवस्थामा मातृभूमि नेपालमा कार्यरत कोभिड प्रभावित पत्रकारहरूको सहयोगार्थ नेपाल पत्रकार महासंघ यूके शाखाको पहिलो भर्चुअल बैठकले रकम संकलन गर्ने निर्णय गर्‍यो । शाखाको पहलमा संकलित ५ लाख १६ हजार रूपैयाँ तत्कालै नेपाल पत्रकार महासंघ केन्द्रको खातामा पठाइयो ।

संकलित रकमबाट महामारीका कारण विभिन्न समस्यामा परेका देशभरका २५ जना पत्रकारलाई २० हजारका दरले 'लेखनवृत्ति' प्रदान र सहयोग आवश्यकतामा रहेका पत्रकारहरूलाई महासंघ केन्द्रको सिफारिसका आधारमा सहयोग वितरण गर्ने उद्देश्यले रकम संकलन गरिएको थियो । संकलित रकममध्ये कोरोना संक्रमण भएपछि उपचार समेत नपाएर ज्यान गुमाएका पत्रकार एलबी विश्वकर्माको परिवारलाई महासंघ केन्द्रसँगको समन्वयमा ५० हजार रूपैयाँ सहयोग प्रदान गरियो ।

कोभिड महामारीका वेला बेलायतस्थित नेपाली समुदायमा आवश्यक सचेतना, सूचना एवम्

जानकारी प्रवाह गर्ने उद्देश्यले सम्बन्धित विज्ञ एवम् स्वास्थकर्मीहरूको सहभागितामा पाक्षिक भर्चुअल 'स्वास्थ्य सचेतना' कार्यक्रम आयोजना गरेको थियो । नेप्लिज डक्टर्स् एशोसिएशन यूके र नेप्लिज नर्सिङ एशोसिएशन यूकेसँगको सहकार्यमा विभिन्न विज्ञ व्यक्तिहरूसँग समसामयिक विषयमा छलफल गरिएको थियो । बेलायतको नेपाली समुदायलाई आवश्यक स्वास्थ्य सूचना, जानकारी र परामर्श उपलब्ध गराउने उद्देश्यले सम्बन्धित क्षेत्रका विज्ञहरूलाई सहभागी गराएर सञ्चालन गरिएको उक्त कार्यक्रम निकै प्रभावकारी भएको सहभागीको मूल्यांकन छ ।

यसैगरी मिडिया र सञ्चारमाध्यममा बेलायतस्थित नेपाली समुदाय र संघसंस्थाहरूको पहुँच र सहभागिता बढाउने तथा सहज पार्ने उद्देश्यसहित एक भर्चुअल कार्यशाला आयोजना गरियो । जसमा संघसंस्थाका प्रतिनिधिहरूलाई प्रेस नोट/ प्रेस रिलिज लेखन कसरी गर्ने ? मिडियामा कसरी आफ्नो सूचनाहरू पठाउने ? भन्ने जस्ता विषयमा केन्द्रित रहेर कार्यशाला आयोजना गरियो । कार्यशालामा शाखाका निवर्तमान अध्यक्ष एवम् पत्रकार नरेश खपाङ्गी मगरले प्रेस रिलिजसम्बन्धी एक विशेष प्रिजेन्टेसन दिएका थिए । उक्त कार्यक्रममा बेलायतभरका ६ दर्जनभन्दा बढी नेपाली संघसंस्थाका करिब एक सय प्रतिनिधि सहभागी थिए ।

नेपाली कला, संस्कृति, भाषा, धर्म, वेषभूषा र परम्परा जगेर्ना गर्न मिडियाको पनि महत्वपूर्ण भूमिका रहेको हुँदा नेपाली समाजका हरेक गतिविधिमा पत्रकार महासंघ यूकेले हातेमालो गर्दै आएको छ । गत वर्ष लण्डनमा आयोजना गरिएको नेपाली मेलामा शाखाले पनि ऐक्यबद्धता जनाएको थियो । गैरआवासीय नेपाली संघ (एनआरएनए) आइसीसीको स्वास्थ्य समितिले लण्डनमा आयोजना गरेको तीनदिने तेस्रो विश्व नेपाली स्वास्थ्य सम्मेलन र विश्वमा नेपालीको अवस्थाबारे आयोजकसँग अन्तरसंवाद गरिएको थियो । शाखाले विशेषगरी लन्डनस्थित नेपाली राजदूतावास, बेलायतस्थित नेपाली संघसंस्था, गैर आवासीय नेपाली संघसँग नजिक रहेर काम गर्दै आएको छ । भूपू गोर्खाहरूद्वारा पेन्सनलगायत समानताका विषयमा गरिएको आन्दोलनलाई साथ दिनको लागि अनसनस्थलमा पुगेर ऐक्यबद्धता शाखाले जनाएको थियो । खासगरी राष्ट्रिय मुद्धाका विषयमा नेपाल र बेलायतबीच महत्वपूर्ण भूमिका खेल्दै आएको छ भने पत्रकारहरूको हक हित र अन्यायका विरूद्ध पनि सशक्त रूपमा आवाज उठाउँदै आएको छ । उदाहरणका लागि युएईमा पत्राउ परी जेल सजाय सुनाइएका पत्रकार उमाकान्त पाण्डेको रिहाइका लागि वैदेशिक शाखाको तर्फबाट आवाज उठाइएको थियो ।

पत्रकारिता पेशालाई थप मर्यादित बनाउँदै प्रोत्साहन दिन नेपाल पत्रकार महासंघ (एफएनजे) यूके वर्ष पत्रकारिता पुरस्कार स्थापना गरियो । नेपाल पत्रकार महासंघ यूके शाखाले स्थापना गरेको नेपाल पत्रकार महासंघ (एफएनजे) यूके वर्ष पत्रकारिता पुरस्कार सन् २०२१ का लागि पत्रकार श्रीभक्त खनाललाई प्रदान गरियो । ५०२ पाउण्ड राशिको उक्त पुरस्कार एकल भए ५०२ पाउण्ड र दुईजनालाई भए जनही २५१ पाउण्ड र सम्मानपत्र सहित प्रदान गरिनेछ । ●

*(लेखक शाखाका वर्तमान महासचिव हुन् ।)*

# बीएफबीएस गोर्खा रेडियो - संक्षिप्त इतिहास



खेम गुरुङ

**ब्रिटिश** सैनिक आकाशवाणी नेपाली सेवाको प्रारम्भ, इस्वी सन् १९५२ को मे महिनाबाट, सिंगापुरस्थित, गोर्खा हेडक्वार्टर फार-इष्ट ल्याण्ड फोर्सेज, टाङलिन ब्यारेकमा स्थापित, फोर्सेज ब्रोडकास्टिङ यूनिटबाट भएको हो । नेपाली भाषामा पहिलो कार्यक्रम सञ्चालिका स्वर्गीय श्रीमती लिना देवराज हुन् । उनको निधन २५ मे १९८९ मा सिंगापुरमा भएको हो । ४ अप्रिल १९५१ का दिन सिंगापुर आइपुगेकी लिना देवराज १/२ गोर्खा राइफल्सको बाल विद्यालय शिक्षिकाको रूपमा देखा परेकी थिइन् । शिक्षिकाका रूपमा एक वर्षसम्म कार्यरत रहेपछि उनी सन् १९५२ सालदेखि तत्कालीन फोर्सेज रेडियो ब्रोडकास्टिङ यूनिटमा संस्थापक सञ्चालिका थिइन् ।

श्रीमती लिना देवराज सन् १९५२ मे महिनाबाट फोर्सेज ब्रोडकास्टिङ यूनिटमा कर्मचारीको रूपमा भर्ना भएकी थिइन् । काम शुरू भएको ६ हप्तामै उनलाई गोर्खाली कार्यक्रमको भार दिइएको थियो । यो कार्यक्रमले मलाया अनि हङकङमा भएका ब्रिगेड अफ गोर्खाजका मानिसहरूको नैतिक अवस्था र आचरणमा ठूलो प्रभाव पारेको थियो । कार्यक्रमहरूमा, घरतिरको समाचार, गीत, एकांकी नाटक र अन्य रोचक कुरा पनि प्रसार गर्नु हुन्थ्यो । कार्यक्रम मन पराएर हरेक महिनामा सिपाहीहरूले कार्यक्रम सम्बन्धी चिट्ठी लेख्थे ।



सन् १९७१ मा, सिंगापुर र मलेशियाको हस्तान्तरणपछि फोर्सेज रेडियो ब्रोडकास्टिङ यूनिटलाई पनि त्यहाँ बन्द गरी हङकङ सार्नुपर्ने भयो र लिना देवराजलाई पनि हङकङ सर्ने आदेश दिइयो तर आफ्नो व्यक्तिगत परिस्थितिले गर्दा हङकङ सर्न सकिनन् । उनको सट्टा ले. (क्यु जी ओ) किशोर गुरूङलाई हङकङको प्रथम कार्यक्रम निर्देशकको अभिभारा सुम्पिइयो र अगस्ट १९७१ मा कार्यालय हङकङ सारी, मलाया लाइन्सको निसान हटमा स्टुडियो स्थापित गरी सेप्टेम्बर महिनाबाट कार्यक्रम प्रसारण आरम्भ गरियो । ३ वर्षपछि ११ डिसेम्बर १९७४ को दिन, बीएफबीएसकै लागि भनी निर्माण गरिएको नयाँ भवनको उद्घाटन, Major General EJS Burnett द्वारा गरियो र कार्यालय निसान हट, मलाया लाइन्सबाट बोर्नियो लाइन्समा सारियो ।

सन् १९७२ मा, Queen Elizabeth Barracks, Church Crookham, UK मा पनि त्यहाँस्थित बटालियनका लागि रेडियो कार्यक्रम प्रसार गर्न आरम्भ गरियो । एउटा सानो स्टुडियो खोलेर हङकङबाट टेपहरूमा रेकर्ड गरी पठाइएका कार्यक्रमहरू, रेडियुजन सिस्टमको १०० वोल्ट लाइन एम्लिफायरद्वारा ब्यारेक्सको कोठा-कोठामा जोडिएका स्पिकरहरूमा पुऱ्याइने गरिन्थ्यो । यसैगरी सन् १९७६ मा, धरान क्याम्पमा पनि त्यस्तै रेडियुजन सिस्टम, जडान गरी कार्यक्रम सञ्चालन आरम्भ गरिएको थियो तर सन् १९८९ मा धरान क्याम्प बन्द गरिएपछि उक्त स्टुडियो पनि बन्द गर्नुपऱ्यो ।

सन् १९७९ सालमा Tuker Lines, Seria, द्यचगलभष न्बचचष्कयल मा पनि त्यहाँको रेसिडेन्ट बटालियनका लागि एउटा सानो रेडियो स्टेशन खोलियो । उक्त स्टेशन, बीएफबीएस हङकङका स्टेशन कन्ट्रोलर मिस्टर जेम्स नेशनद्वारा ८ मार्च १९७९ मा उद्घाटन गरिएको थियो । आरम्भमा दुवै नेपाली अनि अंग्रेजी कार्यक्रमहरू दैनिक ३-३ घण्टा प्रसारण गरिन्थ्यो र सबै कार्यक्रमहरू,

स्वयंसेवक प्रसारक एवं प्रसारिकाद्वारा नै सञ्चालन गरिन्थ्यो ।

सन् १९९७ सालमा, हङकङ चीनलाई हस्तान्तरण गर्नुअघि बीएफबीएस हङकङले अन्तिम कार्यक्रम, २७ अक्टोबर १९९६ को दिन प्रसार गरेको थियो । त्यसपछि त्यहाँ बाँकी रहेका गोर्खा श्रोताहरूका लागि, बीएफबीएस ब्रुनाईद्वारा तयार पारिएको २ घन्टे कार्यक्रम, HMS Tamar, हङकङबाट प्रसारण गर्ने गरिएको थियो । तर सबै व्यवस्था मिलाइसकेपछि काठमाडौँबाट अप्रिल १९९७ बाट कार्यक्रम प्रसारण आरम्भ भयो र सो अस्थायी कार्यक्रमलाई बन्द गरियो ।

मध्यरात ३० जुन १९९७ का दिन बेलायतले हङकङ चीनलाई आधिकारिक रूपमा हस्तान्तरण गरेपछि, १ जुलाई १९९७ बाट हङकङ चीनको हुन पुग्यो र ब्रुनाईस्थित एक बटालियन बाहेक अरू सबै गोर्खा बटालियन बेलायत सर्नु पर्‍यो । बेलायत सरेको एक वर्षपछि बेलायतका विभिन्न भागमा रहेका गोर्खा बटालियनका श्रोताले हङकङमा झैं बेलायतमा पनि हामी आफ्नो भाषाको

> **“सन् १९९७ सालमा, हङकङ चीनलाई हस्तान्तरण गर्नुअघि बीएफबीएस हङकङले अन्तिम कार्यक्रम, २७ अक्टोबर १९९६ को दिन प्रसार गरेको थियो।”**

रेडियो सुन्न चाहन्छौं भनी त्यस बखतका कार्यक्रम निर्देशक खेम गुरूङलाई निवेदन दिए । उनले यो निवेदन प्रधान कार्यालय, बीएफबीएस यूकेका प्रबन्ध निर्देशकसमक्ष राख्दा उनले यो सैनिक रेडियो भएको हुनाले स्टेशन खोल्न र सञ्चालन गर्न कोषको व्यवस्था हुनुपर्छ अनि परीक्षण गर्नुपर्छ । परीक्षण सफल भयो भने मात्र रक्षा मन्त्रालयबाट रेडियो स्टेशन खोल्न अनुमति मिल्छ भने । यति भन्दै उनले यसको जिम्मेवारी पनि खेम गुरूङलाई नै सुम्पिए ।

तसर्थ बेलायतस्थित तगभभल भ्षिबदभतज द्यबचचबअपक, Church Crookham, Hampshire, UK मा ४ हप्ताका लागि ५ सेप्टेम्बरदेखि २ अक्टोबर १९९८ सम्म, 'खुकुरी एफएम १०७ द गोर्खा फोर्सेज रेडियो' को परीक्षण समापन गरियो र भाग्यवश उक्त परीक्षण अत्यधिक रूपले सफल हुन पुग्यो ।

फलस्वरूप दुई वर्षपछि इस्वी सन् २००० मा परीक्षणको अत्यधिक सफलताले गर्दा बेलायती रक्षा मन्त्रालयबाट रेडियो स्टेशन खोल्न अनुमति मिल्यो र कार्यक्रम निर्देशक खेम गुरूङ बेलायतस्थित शोन्क्लिफ ब्यारेक्स, फोल्कस्टोन, केन्टमा गई करिब २ हप्ताको प्रारम्भिक तयारीपछि १३ नोभेम्बर २००० मा 'मिडियम वेभ १२७८ किलो हर्ज ए.एम.मा, यो बीएफबीएस गोर्खा रेडियो शोन्क्लिफ हो' भन्दै प्रथमपटक वायुमण्डलमा प्रवेश गरी श्रोतासमक्ष पुग्न सफल भयौं । त्यसको एक हप्तापछि सोमबार, २० नोभेम्बर २००० को दिन, पूर्व गोर्खा ब्रिगेडका, कर्नेल डब्ल्यू एफ सटलवुड ओबीईद्वारा आधिकारिक रूपमा रेडियो स्टेशनको उद्घाटन समापन गरियो । •

# हार्दिक बधाई तथा शुभकामना

नेपाल पत्रकार महासंघ बेलायत शाखाको
**दशौँ वार्षिकोत्सव तथा**
**स्थापना दिवसको** अवसरमा शाखाका
सम्पूर्ण सदस्यहरुमा हार्दिक बधाई तथा
उत्तरोत्तर प्रगतिको शुभकामना
व्यक्त गर्दछु ।




**दीपक श्रेष्ठ**
**अध्यक्ष**
**बुद्ध फाउन्डेसन यूके**

# हार्दिक बधाई तथा शुभकामना

नेपाल पत्रकार महासंघ बेलायत शाखाको
**दशौँ वार्षिकोत्सव तथा**
**स्थापना दिवसको** अवसरमा शाखाका
सम्पूर्ण सदस्यहरुमा हार्दिक बधाई तथा
उत्तरोत्तर प्रगतिको शुभकामना
व्यक्त गर्दछु ।




**कमल पौडेल**
**निर्देशक**
**आइएमई लन्डन**

# हार्दिक बधाई तथा शुभकामना

नेपाल पत्रकार महासंघ बेलायत शाखाको
**दशौँ वार्षिकोत्सव तथा**
**स्थापना दिवसको** अवसरमा शाखाका
सम्पूर्ण सदस्यहरुमा हार्दिक बधाई तथा
उत्तरोत्तर प्रगतिको शुभकामना
व्यक्त गर्दछु ।




**राजु थापा**
**सोलिसिटर**
**एभरेष्ट ल सोलिसिटर्स लन्डन**

# हार्दिक बधाई तथा शुभकामना

नेपाल पत्रकार महासंघ बेलायत शाखाको
**दशौँ वार्षिकोत्सव तथा**
**स्थापना दिवसको** अवसरमा शाखाका
सम्पूर्ण सदस्यहरुमा हार्दिक बधाई तथा
उत्तरोत्तर प्रगतिको शुभकामना
व्यक्त गर्दछु ।




**अनिल मल्ल**
**युवा संयोजक**
**एनआरएनए यूके**

# बेलायतमा नेपाली मिडियाको प्रवेश र प्रभाव



विजय थापा

> व्यापक र द्रुत गतिले सोसल मिडियामा परिवर्तन भइरहेको समयको गतिलाई नेपाली टिभीलगायत अन्य विभिन्न मिडियाहरुले पक्रन नसक्दा बन्द हुन पुगेकोमा मलाई दुःख लागेको छ । तर थोरै समय भए पनि बेलायतमा जम्दै गरेको नेपाली समुदायको सेवा गर्न पाएकोमा गौरव पनि लागेको छ ।

**सर्वप्रथम** त नेपाल पत्रकार महासंघ यूकेले आफ्नो १० औं वार्षिकोत्सव मनाइरहेको यस अवसरमा हार्दिक शुभकामना छ । यस्ता दशक हजारौँ मनाउन सकोस् र नेपाली समाजलाई उत्तरदायी पत्रकारिता र सही समाचार दिँदै समाजलाई सेवा दिन सकोस् भन्ने शुभकामना पनि दिन चाहन्छु ।

जहाँसम्म बेलायतमा नेपाली पत्रकारिताको सन्दर्भ छ, सन् १९८० ताका बीबीसी नेपाली सेवाबाहेक अरू कुनै पनि नेपाली माध्यमहरू थिएनन् । नेपालको समाचार पढ्न वा जान्नका लागि एक मात्र स्रोत नेपाली दूतावास लण्डन थियो । दूतावास पुगेपछि अनौपचारिक समाचार त्यहाँ कार्यरत अफिसरहरूसँग भेट गरेपछि कुराकानीका क्रममा मिल्ने गर्थ्यो भने औपचारिक समाचार एक हप्ता लगाएर हुलाकबाट आएको गोरखापत्र पढेर लिइन्थ्यो । म नेपालमा रहँदा पनि बीबीसी नेपाली सेवा विशेष गरी सुन्ने भएकाले जब म सन् १९८० को शुरूमा यूके आएँ बीबीसी नेपाली सेवा नै नेपाली समय मिलाएर सुन्ने कोसिस गरेँ । तर पछि साथीहरूले भनेर मात्र थाहा भयो कि बीबीसी नेपाली सेवा त नेपालका नेपालीका लागि मात्र लक्षित गरी प्रसारण गरिँदो रहेछ । यहाँ यूकेमा सहज रूपमा एफएममा सुन्न नसकिने रहेछ ।

त्यसताका यहाँ यूकेमा नेपालीको जनसंख्या निकै न्यून र सञ्चारमाध्यम पनि शून्य नै थियो । नेपालीहरूको सामाजिक गतिविधि, राजनीतिक गतिविधि र नेपालसँग सम्बन्ध नै टुटेको उकुसमुकुस मलगायत अन्य साथीहरूलाई पनि भएको थियो होला । नेपालबाट बेलायत आउँदा म आफ्नो परिवारसित जति बिछोडिएको महसुस गरेको थिएँ त्यति नै मैले नेपाली सञ्चारमाध्यमलाई मिस गरेको थिएँ । केही समय यूकेको बसाइपछि म सामाजिक कार्यमा सक्रिय हुन पुगेँ । त्यसैक्रममा म यूकेकै वा नेपाल बाहिर सबैभन्दा पहिला खोलिएको नेपालीहरूको संस्था 'यती नेपाली एशोसिएशन'मा जोडिन पुगेँ । सन् १९६० देखि सञ्चालित यती त्यतिवेला धेरै सक्रिय र नेपालीको एक मात्र संस्था थियो । यतीले बेलायतमा कार्यरत नेपालीहरू र विद्यार्थीहरूबीच विभिन्न नेपाली पर्व मनाउने र बेलायतीहरूलाई पनि नेपाली कला, संस्कृति, भाषालगायत वेषभूषाको पनि पहिचान गराउँदै आएको थियो । मैले पनि यसै संस्थामार्फत समाजसेवा सँगसँगै पत्रकारितामा प्रवेश गरेर संस्थाको मुखपत्रको रूपमा रहेको पत्रिका 'यतीपत्र'लाई सुदृढ, प्यवस्थित र नियमित गराई बेलायतवासी नेपालीहरूलाई वितरण गर्ने काम गरेँ । त्यसमा मुख्यतया नेपालको समाचार, संस्थाको गतिविधि र नेपालसम्बन्धी अन्तरराष्ट्रिय सामग्रीसमेत समावेश गरेर प्रकाशन गरिन्थ्यो ।

सन् १९८०–९० को दशकसम्म मिडियाहरू पत्रपत्रिकामा मात्र सीमित रह्यो र यसका लागि हामीले पनि टाइपराइटरबाट टाइप गरेर वा हातैले लेखेर नै प्रकाशन गर्‍यौं । सन् १९९०–२००० को दशकमा कम्प्युटरको आगमन भयो । त्यसमा पनि विन्डोजको आगमनले त प्रकाशन क्षेत्रमा उथलपुथल नै गराएको थियो । मैले पनि कम्प्युटर निजी लगानीमा किनेर 'यतीपत्र'लाई कम्प्युटराइज गराएँ । त्यसताका बेलायतमा कम्प्युटरमा नेपाली अक्षर चलाउने १० जनाभित्र शायद म पनि पर्थें हुँला । 'यतीपत्र'को प्रकाशन नै जानी नजानी मेरो मिडियामा प्रवेश हो भन्दा अन्यथा नहोला । यसपछि मैले विभिन्न मिडिया स्थापना गरी निरन्तर समाज सेवा गर्ने मौका पाएँ । मैले 'यतीपत्र'पछि नेपाली रेडियो, चौतारी पत्रिका र नेपाली टिभीको स्थापना गरेर बेलायतवासी नेपाली समाजमा नेपाल र नेपालीबीच सम्बन्ध कायम राख्न प्रत्यक्ष वा अप्रत्यक्ष सहयोग पुर्‍याएको थिएँ ।

तत्कालीन समयमा नेपाली समुदाय सानो र विशेष गरी नगण्य नै रहेको अवस्था थियो । थोरै मात्रामा व्यवसाय प्रायः रेष्टुरेण्ट

भए पनि विदेशीहरूलाई नै लक्षित गरेर खोलिएका हुन्थे । फलस्वरूप मिडियाहरूलाई व्यावसायिक रूपमा निरन्तरताका लागि आवश्यक विज्ञापन, स्पोन्सरहरू मिल्दैनथ्यो । त्यसैले आजसम्म पनि सबैजसो मिडिया कम्पनीहरूले आफ्नो खर्च उठाउन सकेका छैनन् । अधिकांश मिडिया कम्पनीले समाजसेवा मात्र गरिरहेको अवस्था छ । साथै सञ्चारकर्मीहरू पनि पूर्णरूपमा सञ्चारकर्मीकै रूपमा काम गर्न पाइरहेका छैनन् । सन् २००० देखि २०१० को बीचमा डिजिटल दशकको आगमन भयो । नेपालीहरूको जनसंख्या पनि विद्यार्थी, डाक्टर, नर्स र ठूलो संख्यामा भूपू गोर्खाहरू बेलायतमा आएपछि यहाँ नेपालीको जनसंख्या ह्वात्तै बढ्यो । यसले नेपाली मिडिया क्षेत्रमा पनि ठूलो फड्को मारेको थियो । यो दशकमा नेपालीहरूका विभिन्न पत्रपत्रिका, अनलाइन पत्रिका र टिभीको शुरूवात भएको थियो । यसैक्रममा लण्डनमा हामीले सन् २००५ मा नेपाली टिभीको डिजिटल स्याटेलाइटमार्फत प्रसारण शुरू गऱ्यौं । यो नेपाल बाहिर नेपालीहरूको लगानीमा खुलेको पहिलो र एक मात्र नेपाली भाषामा प्रसारण हुने टिभी च्यानल हो । टिभी च्यानल सञ्चालनमा ल्याउन सानोतिनो खर्च र मेहनतले पुग्दैनथ्यो । त्यसमा पनि दक्ष जनशक्तिको पनि अभाव उत्तिकै थियो । साथै विज्ञापनदाता र स्पोन्सरसीपको उत्तिकै अभाव थियो । अभावै अभावका बीचबाट समाज सेवाको भावना भएका केही व्यक्ति मिलेर समाजलाई केही दिनका लागि आफूले कमाएको केही रकम यस कम्पनीमा लगानी गरेका थियौं । म उहाँहरू सम्पूर्णलाई दिलैदेखि धन्यवाद दिन चाहन्छु । किनकि उहाँहरूको समाजसेवाको भावनाले नै सञ्चार क्षेत्रको विकास भएको थियो ।

नेपाली टिभीको करिब १५ वर्षको प्रसारण कालमा विभिन्न किसिमका उत्तरचढाव आए । पहिलो दशकमा हामीले समुदायलाई राम्रैसँग सेवा प्रदान गर्न सफल भयौं । नेपाली टिभीले नाफा कमाउन पनि सकेन र लगानीकर्ताहरूलाई मुनाफा पनि दिन सकेन तर करिब डेढ दशकको प्रसारण कालमा नेपाली समाजलाई आफ्नो कला, संस्कृतिको पहिचान भर्न भने सफल भयौं । विषेशगरी बेलायतमा जन्मी-हुर्की पठनपाठन गरिरहेका बालबालिकाहरूलाई नेपाल, नेपाली कला, संस्कृतिको पहिचान गराउन सकेको महसुस गरेका छौं । प्रसारण कालमा कतिपय विश्वविद्यालयका विद्यार्थीहरूले त नेपाली टिभीलाई यूकेमा नेपाली गौरवशाली लगानीको कम्पनीको रूपमा आफ्नो थेसिसमा उल्लेख गरेका थिए । त्यस्तै भूपू सैनिक परिवारहरूका बुवाआमालाई बेलायतमा बसेर पनि नेपालमै भएको महसुस गराउन सफल भएको हामीले पाएका थियौं ।




तस्विर अर्काइभ-बेलायतमा नेपाली पत्रकारिताको जग बसाउने यतीपत्र
सौजन्य : ध्रुव केसी

सन् २०१० पछि सोसल मिडियाहरूको आगमनले डिजिटल मिडिया क्षेत्रमा भूकम्प आयो । एउटा टिभी च्यानललाई हजारौं हजार पाउण्डको क्यामेरा, एडिटिङ कम्प्युटर, लाइभ प्रसारणका लागि स्याटेलाइट बापत महँगो खर्च लाग्नेमा मोबाइलबाटै लाइभ प्रसारण गर्न सकिने भएपछि धेरै टिभी च्यानलहरू बन्द हुन पुगे । अब त एउटा मोबाइल भयो भने जहाँ पुग्यो त्यहींबाट लाइभ प्रसारण हुन्छ । स्याटेलाइट खर्च पनि चाहिएन क्यामेराको खर्च पनि चाहिएन ।

दुर्भाग्यवश नेपाली टिभीलाई पनि यस्तै किसिमको समय परिवर्तनको प्रत्यक्ष असर पऱ्यो । साथै कोभिड १९ मा परेर नेपालका महाप्रबन्धक गुमाएपछि र नेपालबाट टिभीका लागि सामग्री नै ल्याउन सकिएन । फलस्वरूप बाध्यतावश नेपाली टिभीको प्रसारण बन्द गर्न पऱ्यो । सोसल मिडियालगायत सञ्चारजगत्मा विभिन्न किसिमको परिवर्तन आइरहने र हामी जस्तो सानो समुदायलाई खर्चिलो टिभी च्यानल सञ्चालन गरिरहन कठिन थियो र बन्द गर्नुको विकल्प थिएन । सरसर्ती हेर्दा व्यापक र द्रुत गतिले सोसल मिडियामा परिवर्तन भइरहेको समयको गतिलाई नेपाली टिभीलगायत अन्य विभिन्न मिडियाहरूले पक्रन नसक्दा बन्द हुन पुगेकोमा मलाई दुःख लागेको छ । तर थोरै समय भए पनि बेलायतमा जम्दै गरेको नेपाली समुदायको सेवा गर्न पाएकोमा गौरव पनि लागेको छ । ●

# चुनौतीबीच विदेशमा लोभ लाग्दो पत्रकारिता



डा. जगन कार्की

> सामाजिक सञ्जालको बढ्दो प्रभावले नागरिक पत्रकारिताको बढ्दो प्रभाव र सामान्य गतिविधिलाई सजिलै लाइभ र सम्प्रेषण गर्न सकिने सुविधाले पत्रकारिता आफैँ पनि आफ्नो अस्तित्व र पृथक् पहिचान रक्षा गर्न चुनौतीपूर्ण अवस्थामा छ ।

**प्रवासमा** अनलाइन मिडिया प्रशस्त फैलिँदै छन् । प्रवासमा रहेका पत्रकारपिच्छे एक अनलाइन जस्तो अवस्थामा देखिए पनि यसको दिगोपनमा संकट भने देखिएको छ । डोमेन किनेर वेबसाइट बनाउन सहजताका कारणले प्रवासमा अनलाइनको संख्या बढेको देखिए पनि गुणस्तरमा भने उल्लेख्य वृद्धि भएको पाइन्न ।

प्रवासमा पत्रकारिताका मुख्य प्रकार :

१. व्यक्तिगत पहिचान खोज्ने पत्रकारिता
२. रहरको पत्रकारिता
३. नाम मात्रको पत्रकारिता
४. समाजमा सकारात्मक योगदान गर्ने स्वयंसेवी पत्रकारिता
५. व्यावसायिक पत्रकारिता

यी ५ प्रकारका पत्रकारितामध्ये पछिल्ला दिनमा १ देखि ३ नम्बरसम्मको प्रवृत्ति बढेका छन् । व्यक्तिगत प्रचार र पहिचानका लागि पत्रकारिताको न्यूनतम मूल्य मान्यता पनि नबुझेकाहरूले गर्दा प्रवासमा नेपाली पत्रकारिताको व्यवसायिकता खस्केको छ । पैसावाला या थोरै आर्थिक प्रलोभनमा भजन गाउने सामान्य व्यक्तिगत कार्यक्रम, विवाह, भोजका दैनिक घटनालाई सामान्य कार्यक्रमका मुख्य समाचार बनाउने भजन पत्रकारिताले पत्रकारिताको साख गिराएको छ ।

यी उल्लिखित प्रवृत्तिमध्ये नम्बर ४ प्रवृत्तिलाई भने ठूलो सकस छ । प्रवासमा आफ्नो अमूल्य समय समाज र समुदायलाई योगदान गरेर समाचार लेखेर हिँडेको स्वयंसेवी पत्रकारलाई आर्थिक संकट र आफ्नो मिडिया धान्न मुस्किल छ । खल्तीको पैसा खर्चेर समाचार संकलन गर्ने, सम्प्रेषण गर्ने, मिडिया धान्ने काम २-४ महिना, वर्ष दिनसम्म त धान्न सकिएला तर दिगोपनको प्रश्न अवश्य छ । प्रवासमा रहेका करिब ७० लाख नेपालीलाई हरेक देशका गतिविधि समेटेर समाचार बनाउने काम एक देशमा रहेको अनलाइनमार्फत जसरी सहज छैन त्यसैगरी ठूलो लगानी र व्यवसायिकता साथ नेपालबाट नै सञ्चालित मिडियाले दैनिक सम्प्रेषण गर्ने खबरसँग तुलनात्मक रूपले छनौटमा पर्नु चुनौती छ ।

पंक्तिकार सम्मिलित एक खोजमा अधिकांश प्रवासका अनलाइनको आर्थिक स्रोत व्यक्तिगत रहेको र स्वयं सञ्चालन गरेका मिडिया देखिए । व्यवसायिकताको कमी आउनमा माथिका १-३ प्रवृत्तिका साथै आर्थिक पाटो पनि मुख्य रूपमा रहेको देखिएको छ ।

प्रवासमा सानो जनसंख्या रहेको भए पनि एकाध देशलाई मात्र केन्द्रित गरेर गरिएको पत्रकारिताले पूर्णकालीन पत्रकारितालाई धान्न मुस्किल देखिन्छ । केही देशहरू जस्तै खाडी मुलुक, बेलायत, अमेरिका लगायतका देशमा प्रशस्त नेपाली व्यवसायीहरू पनि बढ्न थालेका कारण विज्ञापन र अन्य स्रोतले एकाध मिडिया धानिन सके पनि पत्रकारपिच्छे शुरू भएका अनलाइन धानिन भने कठिन देखिन्छ ।

### वेबसाइट चलाउनु र अनलाइन पत्रकारिता एकै हुन् त ?

पत्रकारिताका आनै कर्तव्य र जिम्मेवारी हुन्छन् । यसका नीति र सीमा हुने गर्छन् । नैतिक कसी हुने गर्छन् तर सामान्य वेबसाइट चलाउन, ब्लग चलाउन त्यस प्रकारको कसी खासै आवश्यक हुँदैन । पत्रकारलाई पारिश्रमिकदेखि मिडियाका आधारभूत कुरा जुटाउन जुन संसाधन आवश्यक हुन्छ त्यसलाई धान्न, समायोजन गर्न, समाचार लेख्न, सम्पादन गर्न सामान्य ब्लग चलाएको भन्दा पृथक् विषय हुन् । यी दुई फरक विधाबारे नबुझेर वा लहडमा मिडिया चलाउने क्रम बढ्दो भए पनि दिगोपन भने ल्याउने देखिन्न ।

बजारमा आएका खबरलाई कपी गरेर मिडिया चलाउने, मिशन चलाउने, सीमित व्यक्ति र व्यवसायलाई प्रवर्धन गर्ने जस्ता पत्रकारिताभन्दा बाहिरका विषयले प्रश्रय पाउने जस्ता क्रियाकलापले पनि प्रवासमा नेपाली पत्रकारिताको व्यवसायिकतामा आँच पुगेको देखिन्छ ।




**प्रवासी नेपाली पत्रकारिताका चुनौती र सम्भावना**

मिडिया र प्रविधिको प्रभावले विश्व 'ग्लोबल भिलेज' बन्दै गएको छ । कुनै पनि देशमा चलेका अनलाइन मिडियाले विश्वका खबर सजिलै टिप्ने र प्रसार गर्ने त छँदै छ, विश्वभर पहुँच विस्तार गरेका स्रोत साधन र पहुँचमा अब्बल बहुराष्ट्रिय मिडिया कम्पनीहरूसँग पनि प्रतिस्पर्धाको चुनौती छ । आफैँ धानिन हम्मेहम्मे परेका प्रवासका मिडियाका लागि यी चुनौती चानचुन हैन । यसैगरी सामाजिक सञ्जालको बढ्दो प्रभावले नागरिक पत्रकारिताको बढ्दो प्रभाव र सामान्य गतिविधिलाई सजिलै लाइभ र सम्प्रेषण गर्न सकिने सुविधाले पत्रकारिता आफैँ पनि आफ्नो अस्तित्व र पृथक् पहिचान रक्षा गर्न चुनौतीपूर्ण अवस्थामा छ ।

मिडियामा भ्युज र क्लिकसँगै अनलाइन विज्ञापन एजेन्सीहरूले प्रदान गर्ने विज्ञापनको अवसरबाट पनि नेपाली पाठ्यसामग्री मारमा नै छन् । एकै समाचार धेरैतिर आउने र पृथकता कायम गर्न मुस्किल रहेको अवस्थामा पाठकहरू पाउनु, पाएकालाई कायम गरेर राख्न पनि चुनौती छ । गुणस्तरीय समाचार सामग्री, श्रव्यदृश्य निर्माण गर्न समय, स्रोत र परिश्रमको खाँचो त छ नै यसको खर्च धान्न अर्को सकसपूर्ण नियति धान्नुपर्ने चुनौती छ । प्रवासमा रहेका पाठकहरू, जिम्मेवार संघ संस्थाहरू आफ्नो समाचार प्राथमिकताका साथ छपाउन लालायित हुने, विश्वबजारमा बढेको मिडियाको प्रभाव र गुणस्तर खोजी गर्ने तर आफ्नो समुदायको मिडिया धान्न यथेष्ट प्रयास नगर्ने प्रवृत्तिले पनि प्रवासको पत्रकारितालाई पिरोलेको छ ।

फेसबुक, गुगल लगायतका प्रसिद्ध विज्ञापनदाता संस्थाले नेपाली भाषाको सामग्रीलाई महत्व नदिनु पनि चुनौतीपूर्ण छ । आज भारतका गुजराती, पञ्जाबी, हिन्दी लगायत कैयौं भाषाले विज्ञापन र पहिचान पाइरहँदा नेपाली भाषाको सामग्रीले विज्ञापन नपाउनु अन्यायपूर्ण हो । यसमा सरोकारवालाहरूको कसैको ध्यान नजानु आफैँमा विडम्बना पनि हो ।

यी तमाम चुनौती हुँदाहुँदै पनि चाँदीको घेरा पक्कै छ ।

हालसम्म नेपाली समाचार लेखेर प्रवासमा टिक्न स्वयंसेवी पत्रकार बाहेकलाई गाह्रो छ ।

दिगो तथा व्यावसायिक पत्रकारिताका निम्न सम्भावना पनि छन् :

१. प्रवासका विकसित देशहरूमा विकसित मिडियाले नीति तथा प्रविधि अंगीकार गरेर फड्को मार्न सक्ने ।
२. प्रवासका संघ संस्थाहरूबाट मिडियाको सबलीकरण र दिगोपनका लागि साथ र सहयोग लिने ।
३. प्रवासका सीप ज्ञान र छरिएर रहेका पत्रकारहरूलाई एक छातामा समावेश गरी बलियो मिडिया बन्ने ।
४. प्रवासमा छरिएर रहेको १ करोडभन्दा बढी नेपालीको आवाज बन्ने ।
५. प्रवासीहरूमाझ मात्र हैन, विश्व समुदायलाई नेपाली भाषा, कला, व्यवसाय तथा संस्कृतिको प्रवर्धनमा उल्लेख्य भूमिका खेल्ने ।
६. अन्तरराष्ट्रिय गुणस्तरका खबर तथा मिडिया सामग्री प्रस्तुत गरेर नेपाली सामग्री विश्वका पाठकसामु पठाउने ।

उल्लिखित केही सम्भावनासँगै गैरआवासीय नेपाली संघ र प्रवासमा रहेका संघसंस्था र व्यवसायीहरूले आफ्नो हरेक समाचार लेखन प्रवासका स्थानीय मिडिया खोज्ने तर विज्ञापन दिने, प्रवर्धन गर्ने सवालमा सधैँ नेपालका राष्ट्रिय मिडिया या अन्तरराष्ट्रिय मिडियालाई छान्ने प्रवृत्ति छ । उदाहरणका लागि एनआरएनएले केही दिनअघि सिईओको विज्ञापन नेपालका मूलधारे मिडियाबाट गर्‍यो । जब कि यसका हरेक नेता र गतिविधिमा प्रवासका मिडियाको भूमिका छ । मिडिया व्यवसायी भएनन् भन्ने, विदेशी गुणस्तर खोज्ने तर यसलाई सहयोग गर्न भने तयार नरहने प्रवासका संघसंस्थाको भूमिकामा परिवर्तन ल्याउन मिडिया आफैँ सक्षम बन्नु पर्नेछ ।

प्रवासमा छरिएर आ–आनै अनलाइन चलाइरहेका पत्रकारहरू एकै छातामा अडेर नीति, विधि र आचारसंहितामा रहेर काम गर्न सके अझ गुणात्मक फड्को मार्न सफलता मिल्ने देखिन्छ । ●

*(लेखक शाखाका सल्लाहकार हुन्।)*

# सामाजिक सञ्जाल, आमसञ्चार र पत्रकारिताको चुनौती



दिनेशकुमार परियार

**आमसञ्चारलाई** व्यावसायिक रूपमा प्रयोग गर्ने हामी सबैले समाजको आकार बनाउँछौं । हामी समाजलाई बद्नाम गर्न सक्छौं, क्रूर बनाउन सक्छौं वा उच्च स्तरमा उठाउन मद्दत गर्न पनि सक्छौं । अमेरिकी विज्ञापन क्षेत्रका सिर्जनात्मक निर्देशक बिलियम बर्नव्याचले दिएको अभिव्यक्ति अहिले अझ बढी सान्दर्भिक बनेको छ । सामाजिक सञ्जालको बढ्दो प्रयोगसँगै समग्र आमसञ्चार र समाजमा परिवर्तन देखा परेको छ । यहाँ आमरूपमा हुने सञ्चारमा सामाजिक सञ्जालले खेलेको भूमिका मात्रै होइन, पत्रकारितामा देखा परेको परिवर्तनको समेत चर्चा गर्नु वाञ्छनीय छ ।

### सामाजिक सञ्जाल

छापा र विद्युतीय भन्दा अलग विशेषता भएको सोसल मिडिया, जसले वेबसाइट र मोबाइल एप्समार्फत प्रयोगकर्तालाई सिर्जना गर्न, सामाजिक साझेदारी गर्न वा ठूलो जनसंख्यालाई सामाजिक नेटवर्किङमा जोड्न महत्वपूर्ण भूमिका खेलिरहेको छ । फेसबुक, ट्विटर, टिकटक, यूट्युब, इन्स्टाग्राम, लिंक्दइन, ह्वाट्सअप तथा माइस्पेस आदि सोसल मिडियाका प्रसिद्ध प्लाटफर्म हुन् । यो बाहेक आधुनिक युवा पुस्तामा डिस्कर्ड लगायतका प्लाटफर्म र अन्य अनलाइन गेमिङ नेटवर्कहरू पनि छन् ।

> सोसल मिडिया अन्याय, अत्याचार र भ्रष्टाचारविरुद्ध आवाज उठाउने सशक्त साधन पनि भएको छ ।

केपिओसका संस्थापक साइमन केम्पको रिपोर्ट अनुसार नेपालको कुल २९.९५ मिलियन जनसंख्या मध्ये यही वर्षको जनवरीसम्म १३.७० मिलियन जनताले सामाजिक सञ्जाल प्रयोग गरेका थिए । त्यस बाहेक विदेशमा बस्ने ३.५ मिलियन नेपाली पनि सामाजिक सञ्जालसँग जोडिएकै छन् । मेटाको विज्ञापन उपकरणहरूमा प्रकाशित तथ्याङ्कले सन् २०२२ को शुरूमा नेपालमा इन्स्टाग्रामका २३ लाखभन्दा बढी प्रयोगकर्ता रहेको देखाउँछ भने फेसबुक मेसेन्जरका ९६ लाख प्रयोगकर्ता पुगेको देखाउँछ । लिंक्दइनको विज्ञापन स्रोतहरूमा प्रकाशित तथ्याङ्कले सन् २०२२ को सुरूमा नेपालमा एक लाख सदस्य रहेको देखाउँछ । ट्विटरको विज्ञापन स्रोतमा प्रकाशित संख्याले सन् २०२२ को सुरूमा नेपालमा ट्विटरका पाँच लाखभन्दा प्रयोगकर्ता रहेको देखाउँछ । त्यस्तै पछिल्लोपटक विश्वमै चर्चित टिकटकको प्रयोगकर्ता स्टार्ट आईओ भन्ने एजेन्सीले २२ लाखभन्दा बढी भएको अनुमान गरेको छ । यूट्युबमा सबैभन्दा बढी सब्सक्राइब भएको नेपाली च्यानल म्युजिक नेपालको ६० लाख ९८ हजार सब्सक्राइबर छन् भने बुढा सुब्बा डिजिटल, ओएसएर डिजिटल, टुबी गेमर, द कार्टुन क्रुज ५० लाखभन्दा बढी सब्सक्राइब गरिएका च्यानल हुन् । मनोरञ्जनयुक्त च्यानलले समाचार र समसामयिक विषयवस्तु सम्मिलित च्यानललाई उछिनेको छ ।





अहिले मूलधारका मिडिया पनि सामाजिक सञ्जालमा जोडिएका छन् । स्याटेलाइटमार्फत प्रसारण भइरहेका टेलिभिजन च्यानलहरू पनि अन्ततः सामाजिक सञ्जालमा जोडिन बाध्य भएका छन् । यो विश्वव्यापी परिघटना हो र यसबाट नेपाली सञ्चार तथा सामाजिक क्षेत्र बाहिर रहन सक्दैन । सरकारीस्तरका नेपाल टेलिभिजन, रेडियो नेपाल होस् या व्यावसायिक च्यानलहरू कान्तिपुर टिभी, रेडियो कान्तिपुर, कान्तिपुर दैनिक, इमेज च्यानल, एभिन्यूज टेलिभिजन, न्यूज २४, ग्यालेक्सी, हिमालय एचडी, सगरमाथा टेलिभिजन लगायत सबैजसो संचार माध्यम पछिल्लोपटक सामाजिक सञ्जालमा जोडिएका छन् । प्रायजसो मुख्य नेपाली संचार संस्थाहरूको यूट्युबमा १० लाखदेखि ३० लाख सब्सक्राइबर छन् । फेसबुकमा भने २० देखि ४० लाख फलोअर्स रहेका छन् । समाजिक सञ्जालमा प्रवासी नेपालीहरूको पनि उल्लेख्य सहभागिता देख्न सकिन्छ ।

### सकारात्मक असर

भर्चुअल तर प्रत्यक्ष झैं संवाद गर्न मिल्ने संरचना बोकेको सामाजिक सञ्जालमार्फत जो कोही प्रयोगकर्ता सरोकारवालासँग सजिलै जोडिन सकिन्छ । तुरुन्त पोष्टहरू प्रकाशन गर्न सकिने, कमेन्ट र रिप्लाइ लगायत इमोजीबाट आफ्ना भावना पनि दर्शाउन पाइने सामाजिक सञ्जाल

यस युगकै एक महत्वपूर्ण उपलब्धि हो ।

सोसल मिडियाका कारण नै आफन्त र साथीहरूसँग सम्पर्क गर्न सजिलो भएको छ । फेस टु फेस कुराकानी मात्र होइन, नि:शुल्क र तुरून्त सन्देश, फोटो तथा भिडियो आदानप्रदान गर्न सकिन्छ । त्यसो त सोसल मिडिया अभिव्यक्तिको एक सशक्त माध्यम बनेको छ । त्यसैले सोसल मिडिया अन्याय, अत्याचार र भ्रष्टाचारविरूद्ध आवाज उठाउने सशक्त साधन पनि भएको छ । निर्मला पन्तको बलात्कारको मामलादेखि कलाकार पल शाह र समीक्षा अधिकारीको मामलासम्म पनि सोसल मिडियाले नै अहं भूमिका खेलेको देखिएको छ । डा. गोविन्द केसीको अनशनदेखि धरान र काठमाडौंबाट हालसालै निर्वाचित मेयर हर्क साम्पाङ तथा बालेन साहको विजयको यात्रामा पनि सोसल मिडिया सशक्त देखिए ।

**न्याय प्रक्रियामा अवरोध**

न्यायिक निकायहरू अदालत, प्रहरी र प्रशासन सबैलाई सामाजिक सञ्जालले असर पारेको देखिन्छ । उदाहरणको लागि भर्खरै कबड्डी ४ को प्रिमियर सोमा नायिका मिरूना मगरमाथि भएको भनिएको दुर्व्यवहारको मामलालाई लिन सकिन्छ । आफूमाथि दुर्व्यवहार भएको यकिन गरेपछि प्रतिक्रियामा उत्रिएकी नायिका मिरूनाले दुर्व्यवहारको आरोप लगाउँदै फुर्वा लामाविरूद्ध प्रहरीसमक्ष जाहेरी दिइन् । सामाजिक सञ्जालमा उनको व्यापक विरोधपछि स्वयं कबड्डी टिम र केही धर्मगुरू (सबै पुरूष) मिलेर मिलापत्र गराउन बाध्य भए । जहाँ अपराध हुन्छ । त्यहाँ न्याय निरूपण गर्ने जिम्मेवारी पाएको प्रहरीले सदाझैं मिलेमतोमै छिनोफानो गर्ने रीतिलाई निरन्तरता दियो । प्रहरीले आफनो प्रक्रिया अघि बढाउन सकेन र पाएन पनि । न्यायको कठघरामा स्वयं मिरूना वा पीडक आरोपित फुर्वा जो पनि दोषी हुन सक्थे तर सामाजिक सञ्जालको शक्तिले यसको न्यायिक पडतालमा बाधा पुर्‍यायो । पत्रकारहरू धर्मको चेपुवामा पर्ने भयले कलम नचलाई बसे । त्यस्तै काठमाडौँको बबरमहलमा रूपा सुनारले कोठा भाडामा लिनेदिने मौखिक सहमति भइसकेपछि घरधनी सरस्वती प्रधानले आफू दलित समुदाय (कामी) थरको भएको जानकारी गराएपछि कोठा दिन अस्वीकार गरेको जिकिर प्रहरी र अदालत गुहारिन् । घरधनी सरस्वती प्रधानलाई तत्कालीन शिक्षा, विज्ञान तथा प्रविधिमन्त्री कृष्णगोपाल श्रेष्ठको उपस्थितिमा उनकै सरकारी सवारीसाधनमा लगियो । रीतपूर्वक जाहेरी दरखास्त दर्ता गरी निष्पक्ष अनुसन्धान गर्न सर्वोच्च अदालतले आदेश पनि दियो, जुन आदेशको पालना अझै भएको छैन । यद्यपि सामाजिक सञ्जाल त्यतिबेला मज्जाले तातेको थियो । कतिपयले त यसलाई साम्प्रदायिक रंग पनि दिन भ्याए तर नेपाली पत्रकारिता जगतले यसलाई उल्लेख्य रूपमा बहस र पैरवी गर्न सकेन । न्यायको कठघरामा जाँदा स्वयं सुनार पनि दोषी हुन सक्थिन् वा उनले न्याय पाउँथिन् । यसमा पनि प्रहरी प्रशासन र देशको न्याय व्यवस्था नराम्ररी चुकेको देखिन्छ र पनि पत्रकारहरू खुलेर यो विषयमा बोल्न र लेख्न सकेनन् ।

सामाजिक संजालको प्रभाव यति सम्म देखियो कि, एउटी किशोरीले सात बर्षअघि आफूमाथि भएको यौन शोषणको तथ्य सार्वजनिक गर्दा सिंगो समाजकै ध्यान त्यसले खिच्न सक्यो र आरोपित पक्राउ परे । त्यही मुद्दाले व्यवस्थापिका र कार्यपालिकामा प्रवेश मात्रै पाएन त्यस्तो विषयमा हदम्यादको बहस समेत गरायो । सामाजिक संजाल कति शक्तिशाली छ भन्ने अर्को उदाहरण वालेन शाहको शैलीको टिप्पणी गर्दा चर्चित न्युज पोर्टल अनलाइनखबरलाई अनफलो गर्ने ट्रेण्ड नै चलाइयो र अनलाइनखवरले ठूलै संख्यामा फलोअर्स गुमाउनुपर्‍यो । यसप्रकार विभिन्न घटनाहरूबाट के देखिन्छ भने सामाजिक सञ्जालको भीडले राज्यसंयन्त्रहरू प्रभावित बन्न थालेका छन् । यसतर्फ पत्रकारिता जगत सजग र सचेत हुन जरूरी छ ।

**सभ्य समाज निर्माणमा पत्रकारहरु**

सामाजिक सञ्जाल एउटा अम्मल वा लतको रूपमा पनि परिणत हुँदै गइरहेको छ । व्यक्तिगत र सामुदायिक ईर्ष्या, कुण्ठा पोख्ने माध्यमका रूपमा पनि सामाजिक सञ्जाल प्रयोग हुँदै छ । कुनै पनि समाचारको पोष्टको कमेन्टमा गएर हेर्नेबित्तिकै यो कुरा झल्किहाल्छ । प्रायजसो राजनीतिक दलको क्रियाकलाप, नेताको चर्को भाषण मिडियाले महत्वका साथ प्रसारण गर्दा समुदायमा खाली नकारात्मक सन्देश गइरहेको हुन्छ । केही समयअघि राप्रपाका नव निर्वाचित अध्यक्ष राजेन्द्र लिङदेनले नेतालाई चोरको संज्ञा दिँदा लाग्थ्यो कि पूरै सामाजिक सञ्जाल राप्रपामय भएछ । नेता भनेकै चोर हुन् भन्ने दृष्टिकोणबाट सामाजिक सञ्जालको ताण्डव देखियो तर यस सवालमा पत्रकारहरूले संयमित रूपमा राजनीतिक डिस्कोर्सको थालनी गर्न सकेनन् । आमसञ्चार र पत्रकारिता मार्फत प्रदान गरिने सन्देशहरू जिम्मेवार शालीन र समाजपरक हुनुपर्ने हो । किनकि पत्रकारितामा आचारसंहिता हुन्छ, संहिता लागू गराउन राज्य संयन्त्र हुन्छ । सम्पादकीय दृष्टिकोणसहितको सन्देश समाजमा जाँदा समाजलाई सही दिशामा हिडाउन मद्दत पुग्छ । अन्यथा सामाजिक सञ्जालमा जसरी यो भाँडभैलो देखिएको छ त्यसरी नै पत्रकार र पत्रकारिता जिम्मेवार नहुँदा झनै ठूलो दुष्प्रभाव पर्न सक्छ ।

**अन्त्यमा**

सामाजिक सञ्जाल आधुनिक अवसर हो । पत्रकारिता क्षेत्रले यो अवसरलाई जिम्मेवारीपूर्वक प्रयोग गर्ने उपयुक्त वातावरण नबनाउने हो भने समाज विकृतितर्फ उद्यत हुन्छ । यो समग्र पत्रकार र पत्रकारिता जगत्का लागि चुनौती पनि हो ।

*(लेखक शाखामा वरिष्ठ उपाध्यक्ष छन्)*

# पत्रकारको संरक्षक बनोस् महासंघ



प्रकाश के.सी.

**हुर्हुरिएर** आएको होस्, एक छिन, अनुहार नै रौंकिएको जस्तो महसुस हुन्थ्यो । योपालि केही ज्यादा नै गर्मी बढेको थियो । मानिसहरू सर्ट, टिसर्ट वा कमिज नै फुकालेर त्यसैको एक सरोलाई पत्ताभैं हम्फिँदै र अर्को सेरोले अनुहारको पसिना पुछ्दै सडकको छेउछेउ हिँडिरहेका हुन्छन्, वीरेन्द्रनगरको बुद्धचोक हुँदै बसपार्कतर्फ । छेउको एक दोकानमा मानिसहरू थुप्रिएका हुन्छन्, तातोमा अभैं तातो चियाको चुस्की लगाउँदै, चाखपूर्वक बजारकी एक युवतीको बिग्रेको प्रेम सम्बन्धको खबर स्थानीय समाचारपत्रमा पढिरहेका हुन्छन् । पेट बोकेकी ती युवतीलाई अदालतमा नै चरित्रहीन सावित गर्न सक्षम, दर्जनौं साथीहरूका साथ पाएका एक सरकारी कर्मचारी युवकको सानो कथाले सो वेलाको स्थानीय समाचारपत्रमा ठूलै ठाउँ पाएको थियो । त्यसको दोस्रो दिन ती युवती वीरेन्द्रनगरबाट हराएकी थिइन्, अर्थात् देखिएकी थिइनन् ।

पत्रकारिताको मूल्य र मान्यता वा नियम, कानून तथा आधार एकै भए पनि शैली अनि प्रस्तुति प्रशस्तै बेग्लिएको यो वेला हो । खबर व्यक्त गर्ने माध्यम नै पत्रकारिता हो भन्न सक्ने गरेर पत्रकारिताको दायरा फैलिएको छ । सामाजिक सञ्जाललगायत यूट्युबले त झन् पत्रकारिताको परिभाषामा नै पुनर्विचार गर्नुपर्ने अवस्था सिर्जना गराएको छ यो वेला, खासगरी नेपाली परिवेशको सन्दर्भमा । पत्रकारिताको नयाँ परिभाषा दिन सकिने यो समय पत्रकारिता तथा समाजकै लागि पनि सकारात्मक तथा नकारात्मक दुबै पक्षले महत्वपूर्ण बनेको छ । तर ऊ वेला, अवस्था यस्तो थिएन । सुर्खेतको वीरेन्द्रनगरमा हराएकी ती गर्भवती युवती उक्त घटनाको १४ वर्षपछि काठमाडौंको क्षेत्रपाटीबाट भुरूङखेल छिर्ने गल्लीमा रहेको सानो भट्टी चलाउँदै गरेको अवस्थामा भेटिएकी थिइन्, साथमा लगभग १३ वर्षकी छोरीका साथमा । सुर्खेतको तत्कालीन स्थानीय समाचारमा छापिएको पन्ध्र लाइनको समाचारबाट उनको जीवन नै बदलिएको थियो । आफ्नो साँचो प्रेममा धोका खाएकी उनले समाचारको माध्यमबाट आफ्नो चरित्रमा पनि ठूलो धोका पाएकी थिइन् । समाचारमा उनका अन्य व्यक्तिहरू (प्रेमीका साथीहरू) सँग पनि शारीरिक सम्बन्ध रहेको समाचारलाई आधार मानेर अदालतले उनको पेटमा रहेको सन्तान उनको प्रेमीकै हो भन्ने आधार नरहेको भनेर उनको मुद्दा नै रद्द गरिदिएको थियो । त्यही रात आत्महत्या गर्न हिंडेकी उनलाई बाबुले बचाएर नेपालगन्ज ल्याएका थिए । धनी परिवारमा हुर्केकी ती युवती, समयको विकराल अनि लामो अन्तरालपछि काठमाडौंमा भट्टी चलाउँदै गरेकी देखिएकी थिइन् । यस कथातिर अब अगाडि नजाऔं अहिले तर यहाँ भन्न के खोजिएको हो भने पत्रकारिताको मूल मर्म तथा धर्म ननिभाएको एक समाचारले एक युवतीको जीवन नै खत्तम बनाएको एक उदाहरण उद्धृत गरिएको हो यहाँ ।

नेपालमा पत्रकार राष्ट्रको चौथो अंग भनिएको छ अनि त्यसैको प्रभावले परदेशमा पनि नेपालीहरू त्यसै भन्छन् तर पत्रकार तथा तिनको पत्रकारिताको बन्ध्याकरण गरिने अंगको अभावमा नेपाली परिवेशमा पत्रकारिता गरिने शैली डामेर छोडेको साँढे जस्तो भएको भने वास्तविकता हो । व्यक्तिको व्यक्तिगत स्वतन्त्रता अनि पत्रकारको वाक् स्वतन्त्रताको उपभोगबीच रहेको एक मिहीन रेखालाई पहिचान गर्न दुबै पक्ष असफल भएका दृष्टान्त समाजमा बारम्बार देखिएका हुन्छन्, जसमा खासगरी नेपालीहरूका लागि पत्रकारिता गरिने नेपाली समाजको ध्यान जानु जरूरी भएको छ ।

एकपटक हङकङमा समाचार लेखिने क्रममा म आफैंद्वारा पत्रकारिताको मूल्य र मान्यताविपरीत समाचार घटना र विचारमा छापिएको थियो, जुन त्यति वेला समय सान्दर्भिक अनि सही तथा सार्थक मानिएको थियो । ९९ प्रतिशत नेपाली जनजाति रहेको हङकङमा जनजाति महावाणिज्यदूत नै चाहिन्छ भनेर आन्दोलनरत जनजाति महासंघ हङकङले कालो झण्डा देखाउन राखिएको एक कार्यक्रममा हङकङ नेपाली महासंघको तत्कालीन अध्यक्षको भएको उपस्थितिलाई गलत भएको भन्ने अभिप्रायको उक्त समाचारमा, अध्यक्षले आफू जातिवादी, विचारवादी अनि क्षेत्रवादीरहित संस्था

> “बेलायतमा नेपाली पत्रकारहरु एकत्रित हुने अवस्था अति नै राम्रो हो, जसको बलियो आधार नेपाल पत्रकार महासंघ पक्कै हो। पत्रकारिताको परिभाषा अब संकीर्ण र, साँघुरो रहेन।”

हङकङ नेपाली महासंघको अध्यक्ष भए पनि आफू जनजाति भएको आधारले अनि जनजाति महासंघसँग आबद्ध भएकाले गर्दा आफ्नो उपस्थिति त्यहाँ जायज भएको बताएको भनाइ पनि समाहित थियो । समाचारमा ती अध्यक्ष एक व्यक्ति मात्र नभई गैरजातिवादी, गैरविचारवादी अनि गैरक्षेत्रवादी संस्थाको अध्यक्ष भएकाले उनको जातिवादी कार्यक्रममा हुने उपस्थिति उनको मात्र नभई पूरै संस्थाको गलत भएको भन्ने तर्क मेरो समाचारमा रहेको थियो । त्यहाँ एक व्यक्तिको व्यक्तिगत स्वतन्त्रताको खिल्ली उडाइएको थियो । एक मन्त्री वा अध्यक्ष यदि कुनै वेश्यालयामा यौन सन्तुष्टि लिन जान्छ, सो खबर यदि समाचारमा आउँछ भने त्यस व्यक्तिले आफ्नो मानहानि भएको दाबी गर्न सक्छ, किनकि मन्त्री तथा अध्यक्ष एक व्यक्ति पनि त हो, जसले आफ्नो छुट्टीको समयमा, कानूनी रूपमा सञ्चालनमा आएको वेश्यालयमा गएर तोकिएको रकम तिरेर यौन सन्तुष्टि खरिद गर्न पाउने उसको व्यक्तिगत स्वतन्त्रता हो, जसको उपभोगलाई समाचारमा अतिरञ्जित गरेर फैलाइनु उसको व्यक्तिगत स्वतन्त्रताको हनन गरिएको हो ।

सन् २०१० तिर हातका औंलामा गन्न सकिने व्यक्तिहरू मिलेर नेपाल पत्रकार महासंघको बेलायत शाखाको स्थापना गरिएको हो, प्रत्यक्ष रूपमा म त्यस वेला चुनावमा उपस्थित हुन नसके पनि इमेलहरूमा सशक्त उपस्थिति दर्शाएको एक व्यक्ति हुँ । स्थापनाका वेलामै पनि राजनीतिको फोहोरमैला खेल शुरूवात भइसकेको थियो । एक कार्य समिति पनि पूर्ण रूपमै बनाउन नसकिने पत्रकारहरूको संख्याको अभावमा पदपूर्ति गरिने कार्यहरूका साथ पदहरूको छनोटमा पनि खेल खेलिने क्रम शुरू भइसकेको थियो । खासगरी उपाध्यक्ष पदका लागि चिरन शर्मा र विपीन निरौलाबीच खेल खेल्न शुरू भइसकेको थियो। यसै क्रममा बेलायतमा समाचार लेख्नेहरूमा उत्कृष्ट व्यक्ति शशि पौडेलले आफ्नो घोर अरूचि देखाएर समूहमा देखा पर्न अस्वीकार गरेका थिए र औंलामा गनिने पत्रकारहरूका नाममा परेको मैले पनि पहिलो कार्यसमितिको चुनावमा नै अनुपस्थिति जनाएको थिएँ । त्यही संस्था केही वर्षभित्रै सयौं पत्रकारको ठूलो संस्था बनेको थियो । हरेक क्षेत्र र तप्काका व्यक्तिहरूको प्रविष्टि गराएर संस्था गुल्जार बनेको समयमै राजनीति गरिने अड्डाको रूपमा पनि परिमार्जन हुनतर्फ संस्था सञ्चालित बन्दै थियो । आखिरमा आएर गत वर्ष संस्थामा पत्रकारहरूको संख्यामा काँटछाँट गरेर लगभग तीन दर्जन सदस्यहरूको चुस्त संस्थाको रूपमा नेपाल पत्रकार महासंघको बेलायत शाखाले तीन वर्षको कार्यावधि पाएको छ, जसले आफ्नो स्थापनाको दशौँ वार्षिकोत्सव मनाउने भएको छ । यो साँच्चिकै स्वागतयोग्य छ ।

संगठन भनेको व्यक्तिहरूको सामूहिक भेला हुने ठाउँ हो, जसमा व्यक्तिले बोल्ने अनि भोग्ने अवस्थाहरूको समाहित स्वर तथा भोगको शक्ति स्थापना हुन्छ । पत्रकारहरूका हकहितका लागि लड्ने संस्था पत्रकार महासंघ हो तर बेलायती नेपालीहरूका परिप्रेक्ष्यमा पत्रकारहरूका कुनचाहिँ हकहितको पक्षपाती बनेको छ त पत्रकार महासंघ ? संस्थाको बेलायत शाखामा पद र त्यो पदले आय गराउने प्रतिष्ठाको आँचको भ्रममा अझै संस्थामा पद ओगट्न लालायित व्यक्तिहरूले संस्थाको अस्तित्वलाई नै छायामा पारेका छन् जसलाई नेपाल पत्रकार महासंघले साथ दिएको लाग्छ । स्पष्टै रूपमा पत्रकार महासंघको बेलायत शाखा नेपाली राजनीतिको खेल खेलिने अड्डाभैँ बनेको छ भन्दा अन्यथा नहोला । तथापि, बेलायतमा नेपाली पत्रकारहरू एकत्रित हुने अवस्था अति नै राम्रो हो, जसको बलियो आधार नेपाल पत्रकार महासंघ पक्कै हो । पत्रकारिताको परिभाषा अब संकीर्ण र, साँघुरो रहेन । नागरिक पत्रकारिताको महत्व दिनप्रतिदिन बढ्दै गएको बखतमा नेपाल पत्रकार महासंघमा पत्रकारहरू अटाउन सक्ने अवस्था सरल बनाइनु पर्छ तर पत्रकारिताको मूल्य र मान्यताउपर स्थापित गराउन पत्रकारितामा अटल रेखा खिँचिनु जरूरी छ । पत्रकारको स्तर तथा योग्यता तिनको व्यक्तित्वले होइन, तिनको कार्य र त्यसउपरको सत्यता अनि इमान्दारीले दर्शाउँछ भन्ने खासगरी नेपाल पत्रकार महासंघमा लागू हुनु जरूरी छ भन्दै नेपाल पत्रकार महासंघ, बेलायत शाखाको दशौँ वार्षिकोत्सवको उपलक्ष्यमा इमान्दार शुभकामना दिन चुकाउँदिनँ अन्त्यमा । ●

*(लेखक घटना र विचार साप्ताहिकमा आबद्ध छन्।)*



# महामारीको नाउँमा मानवअधिकारको हनन



जयराम तामाङ

**बेलायत** – संसारको जुनसुकै कुनामा बसे पनि मानिसलाई स्वतन्त्र रूपले बाँच्न पाउने अधिकार छ भन्दै सन् १९४८ मा मानवअधिकारका लागि भनेर मानवअधिकार संगठनको स्थापना भएको थियो । अहिलेसम्म मानव अधिकारका लागि भनेर खोलिएका धेरै संघ, संस्था र संगठन होलान् तर ती कागजमा मात्रै सीमित रहेको देखिन्छ । मानवअधिकारको हनन कति ठाउँमा भइरहेको देखेर पनि शक्तिका अगाडि चुप लागेर बस्न बाध्य बनाएका थुप्रै उदाहरण इतिहासमा देखेका छौं । हामीले देखेका अनि सुनेका बाहेक पनि कैयौं घटना भित्रभित्रै लुकिछिपी गरेको पनि हुन सक्छ ।

अहिले कोरोना भाइरस नामको धक्काले विश्वका अधिकांश देशको अर्थतन्त्र डामाडोल भएको छ । अर्कोतर्फ यही भाइरसले गर्दा कैयौं कम्पनी र व्यक्ति भने मालामाल कमाएर अरबपति खरबपति बनेका छन् । जुनसुकै नामको भाइरस आए पनि जति त्यसले असर गरेको छ त्योभन्दा कैयौं गुणा असर डर र त्रासको अफवाह फैलाएर संसारभरका मानिसहरूको धनजनको सर्वनाश बनाइदिएको छ । देश र जनताको नाममा राजनीति गर्ने देशद्रोहीहरूका लागि कोरोना भाइरस ठूलो हतियार बनेको छ । उनीहरू सत्तामा बसेर कानून बनाउँदै आदेश दिइरहन्छन् भने जनता पालन गर्न बाध्य भइरहन्छन् ।

उनीहरू नियम कानून जतिकै बनाए पनि आफू भने कहिल्यै पालन गर्दैनन् । जनताले कतिको सास्ती खेपेको छ । उनीहरूलाई मतलब हुँदैन । उनीहरूको ध्यान भनेको जनताले कानून पालन गरेको छ कि छैन, कानून पालन नगरेबापत कति जरिवाना जम्मा भयो, कुन कम्पनीलाई मास्क बनाउन दिने, कुन कम्पनीलाई स्यानिटाइजर बनाउन दिने, कुन देशबाट भ्याक्सिन किन्ने र त्यसबापत कति कमिशन आउँछ भन्ने कुरामै रूमलिरहेको हुन्छ । एउटा ज्वलन्त उदाहरण बेलायतमा यतिखेर सनसनीपूर्ण खबर बनिरहेको छ । जनतालाई आइसोलेशन नामको नजरबन्दमा राखेर आफू र आफ्नो भरौटेहरूका साथमा पार्टीमा मोजमस्ती गर्दै खाँदै र पिउँदै गरेको खबरले प्रधानमन्त्री बोरिस जोनसोनको जागिर धरापमा परेको छ । आनै पार्टीभित्र कलह शुरू भएपछि



पार्टीभित्रैबाट आरोप प्रत्यारोप मात्रै भएन, पार्टी नै परित्याग गरी प्रतिपक्षको कुर्चीमा बसेर आफैँतिर औंला तेर्स्याउँदा जनतासामु माफी माग्न बाध्य भए । आफू चाहिँ नियम कानून नमान्ने, अरूलाई चाहिँ किन नियम कानून पालन नगर्ने भनेर कारबाही गर्दै जरिवाना तिराउने, फोहोरी राजनीति गर्ने राजनीतिज्ञहरूको बानी कति स्वार्थी र हेपाहा प्रवृत्ति छ । कोरोना भ्याक्सिन लगाउनै पर्छ, होइन भने जागिरबाटै निकालिदिन्छु भनेर स्वास्थ्य क्षेत्रमा काम गर्नेहरूलाई धम्की दिएपछि हजारौँ नर्स आन्दोलनमा उत्रिएका छन् । केही दिनअगाडि मात्रै प्रधानमन्त्री जोनसोनको कार्यालयअगाडि गएर 'शेम अन यु' अर्थात् तपाईँलाई लाज लाग्नुपर्ने हो भन्दै हजारौँले आफ्नो काममा लगाउने लुगाहरू (यूनिफर्म) प्रधानमन्त्री कार्यालय अगाडि फालेका थिए ।

दुईवटा भ्याक्सिन अनि बुस्टर डोज लगाएका स्वास्थ्यकर्मी लगायत कैयौं मानिसको पनि कोरोनाले ज्यान लिएको छ भने ती नलगाएका डाक्टर नर्सहरूलाई भ्याक्सिन नलगाएको भनेर कामबाट निकाल्नु भनेको हास्यास्पद कुरो हो । आखिरी कोरोना भ्याक्सिन कोरोनाको औषधि भने होइन, त्यो आखिरी इम्युन सिस्टम अर्थात् प्रतिरोधात्मक शक्तिका लागि हो । कैयौं मानिसहरू ब्लड क्लट अथवा रगत बाक्लो भएर रगत जमेर मृत्यु भएका पनि छन् । यदि सरकारलाई कोरोना भ्याक्सिन सुरक्षित अथवा ग्यारेन्टी छ भनेर सोध्यो भने ग्यारेन्टी लिन सकिँदैन भन्ने जवाफ दिन्छन् । कोरोना शुरू भएको पनि दुई वर्षभन्दा बढी भइसक्यो । त्यतिका दिनसम्म त केही भएन भने अहिले आएर किन पच्चीसतीस वर्ष सेवा गरिसकेका कर्मचारीलाई वृद्धाश्रमबाट निकाले, प्रश्नचिह्न खडा भएको छ ।

हजारौँ नर्स र डाक्टरहरू विदेशबाट भित्र्याउने क्रम जारी रहँदा भएको आनै घरका नर्स र डाक्टरलाई कामबाट निकाल्नु कतिको सान्दर्भिक छ, जोसुकैले सजिलै बुझ्ने कुरा हो । यदि कसैले म भ्याक्सिन लगाउँदिनँ भन्न पाउनु उसको अधिकारको कुरा हो । म मरे पनि मरूँ तैपनि जबसम्म मर्दिनँ तबसम्म म काम गर्छु भन्नु पनि उसको अधिकारको कुरा हो तर धेरै देशमा मर्नुभन्दा पहिला नै सरकारले मनस्थितिलाई मारिदिइसकेको छ ।

संसारका धेरै मानिसहरूको दैनिकी काममा निर्भर रहने भएको हुनाले यदि काम नभएको खण्डमा धेरै मानिसले ऋण अनि दु:खका कारणले आत्महत्या गरेका पनि छन् र गर्ने पनि छन् । एक स्वस्थ मान्छेले अरूसँग काम गर्दैगर्दा साथीलाई केही नभए पनि कोरोना पोजिटिभ देखायो भने घरमा बिनाकसुर तलबबिना दश दिनसम्म बस्नुपर्ने । कतिसम्म अन्याय गरेको छ सरकारले भनेर भोगेको मानिसलाई मात्र थाहा हुनेछ । आज मलाई त्यही भएको छ । मेरो छोरालाई साधारण खोकी लागेको थियो । मैले पारासिटामोल ल्याएर दिएँ अनि एकदिनमै धेरै ठिक पनि भयो । अघिल्लो दिन स्कूल नगएकाले छोराको स्कूलबाट पठाएको काम न काजको लो टेस्ट भन्ने किटमा कान कोट्याउने जस्तो रूवा भएको सानो सिन्काले दलेर झोल पदार्थमा डुबाएर त्यो झोल पदार्थ चेप्टो भाँडोमा हाल्दा दुईवटा रातो धर्का आयो ।

त्यो रातो धर्का आउनु भनेको कोरोना लागेको हो भनेर धेरै विज्ञहरूले भन्ने गरेका छन् तर यो कोरोना नभएर साधारण रूघाखोकी लागेको हो । छोरालाई कोरोना लागेको हो भनेर म र मेरी श्रीमती केही नभएको मान्छे पनि आइसोलेशनमा बस्नुपर्ने, घरबाटै निस्कन नपाउने, काममा जान पनि नपाउने, सरकारले कतिसम्म अन्याय र अत्याचार गरेको छ भनेर म जस्ता कामदारले सोच्ने वेला भएको छ । कतै जानु पऱ्यो पिसिआर टेस्ट गर्नुपर्ने, कतैबाट आयो पिसिआर टेस्ट, त्यो पनि महँगोमा । काममा पनि जान नपाउने, यो त अति नै भइसक्यो । कतैबाट आयो बाइस तेइस सय पाउण्ड तिरेर होटेलमा बस्न बाध्य बनायो ।

कोरोना भाइरसले भन्दा पनि बढी मानिस अप्रत्यक्ष रूपमा नेताहरूले मारिसकेका छन् । लकडाउनको नाउँमा धेरै गरिबका छोराछोरीहरूले खान नपाएर आत्महत्या गर्न बाध्य भए । कतिका बाबुआमाले छोराछोरीको मुख देख्न पाएनन्, कतिका छोराछोरीले आमाबाबुको मुख देख्न पाएनन् । कतिको मिर्गौला गायब भयो, कतिको आँखा नै गायब भयो । कोरोना लागेको छ हेर्नु र भेट्नु हुँदैन भन्दै काम लाग्ने जति अंगहरू निकालेर कतिमा बेचे, कसैलाई थाहा भएन । कतिको व्यापार व्यवसाय डुबेर आत्महत्या गर्न बाध्य बने । कतिको घरमा झगडा निम्त्यायो, कतिलाई ऋणमा डुबायो । रोगलाई रोकथाम गर्नु ठिकै हो तर यो अति नै भएको छ ।हस्पिटलमा काम गर्ने कामदारलाई प्रत्येक बिहीबार साँझ आठ बजे राम्रो काम गऱ्यो भनेर झ्यालढोका बाहिर निस्केर देशभर ताली बजायो तर एक सुको तलब बढाइएन । नेताहरूलाई भने यातायातको सुविधा छ, कतै गयो भत्ता पनि पाक्छ । यस्तो रूघाखोकी पहिला पनि लागेको थियो । त्यो वेला पनि मान्छेहरू मरेका थिए । यो कोरोना भाइरसको नाउँमा मानवअधिकारको हनन भएको हो भनेर किन कसैले बोल्दैनन् । अचम्म लागेको छ । ●

# पत्रकारितामा बढ्दै महिला हस्ताक्षर


विमला सेने

> नेपालका महिला पत्रकारहरूको चुनौती र बेलायतका महिला पत्रकारहरूको चुनौती भौतिक रुपले केही फरक भए पनि उही नेपाली सामाजिक मानसिकता बोकेका हामी नेपाली नै यहाँ भएकाले महिलालाई हेर्ने दृष्टिकोणमा फरक छैन।

**कामबाट** घर फर्किएर किचनमा छिर्न नपाउँदै इमेल नोटिफिकेशनको आवाजले फोनतिर ध्यान बढायो । नेपाल पत्रकार महासंघबाट आएको इमेल भएकाले हौसिदै खोलेँ । इमेलमा नेपाल पत्रकार महासंघ बेलायतको १० औँ वार्षिकोत्सव मनाउने क्रममा स्थापना कालदेखि बेलायतमा रहेर शाखाले गरेको कामको समीक्षा र गतिविधि तथा वर्तमान समयमा पत्रकारिताका विषय समेटेर स्मारिका प्रकाशनको क्रममा बेलायतमा नेपाली पत्रकारितामा महिला हस्ताक्षर शीर्षकमा लेख मागिएको रहेछ । त्यो इमेल पाएपछि म घोत्लिरहेकी छु, बेलायती डायस्पोरामा पत्रकारिता क्षेत्रमा नेपाली महिलाहरूको अस्तित्व कहाँ छ, कस्तो छ, हुनत पत्रकारिताको विषय आफैँमा बृहत् छ । यसका विविध आयाम छन् तैपनि सामान्यतया हाम्रो समाजले बुझेको पत्रकारितामा महिलाहरूको अवस्था कस्तो छ, एक दशकभन्दा लामो बेलायत बसाइँका क्रममा यो क्षेत्रमा भोगेका देखेका मेरा अनुभव समेट्न खोजेकी छु । मेरो पत्रकारिता रेडियोबाट शुरू भई टेलिभिजन प्रस्तोताको रूपमा बेलायतमा काम गरेकाले म बढी मल्टीमिडियामा भएका मेरा अनुभव पनि बाँड्न चाहन्छु ।

समाजमा भएका, हुँदै गरेका र भविष्यमा हुने गतिविधिलाई सबैमाझ प्रस्तुत गरिने उद्देश्यले पत्रकारिताको शुरूवात भए पनि वर्तमानमा पत्रकारिता वा सञ्चारगृहहरू शक्तिकेन्द्रको रूपमा स्थापित हुँदै गएका छन् । पुँजीपतिहरूका लागि सञ्चारगृह कालो धन सेतो बनाउने मञ्चको रूपमा विकसित भएको छ । समयको विकास क्रमसँगै सञ्चारका साधनहरूमा विविधता आएको छ । हिजो कागजको पन्नामा कालो मसीले लेखिएका समाचारपत्रहरू हेर्ने बानी बसेको हाम्रो समाज रंगीन पत्रिका, रेडियो हुँदै टेलिभिजनका पर्दामा रमाउँदै आएको छ । अझ पछिल्लो दशकदेखि विज्ञान र प्रविधिको विकासले ल्याएका अनलाइन (वेबसाइट)हरू, फेसबुक, यूट्यूब, ट्वीटर, टिकटक जस्ता सामाजिक सञ्जालहरूले सबैलाई पत्रकार बन्ने अवसर दिएको छ । मोफसलमा रहेका पत्रकारिता गर्न चाहनेहरूलाई यसले सुनौलो अवसर प्रदान गरेको छ । समाजका पिछडिएका आवाजले स्थान पाएका छन् । लुकाइएका घटना, छोपिएका अपराधलाई सबैका सामु ल्याउन पहुँच पुगेको छ, जसको पछिल्लो उदाहरण हो- सुस्मिता रेग्मी काण्ड । उनले १० वर्षसम्म लुकाएको पीडा टिकटकमार्फत सार्वजनिक गर्न सकिन् । एकातिर यस्ता सामाजिक सञ्जालहरूले पत्रकारहरूलाई चुनौती पनि भएको छ किनभने यसले समाचारको स्रोत र विश्वसनीयतालाई कम गर्ने गरेको पाइन्छ । पाठक, श्रोता र दर्शकलाई कहिलेकाहीँ भ्रम सृजना हुने गर्छ । कसको सूचनालाई ठिक मान्ने भनेर उनीहरू अन्योलमा पर्छन् ।

स्वतन्त्र विचार पोख्ने अवसर भए पनि सामाजिक सञ्जालहरूमा पक्षपात पूर्ण विचार, सतही विचार तथा पूर्वाग्रही विचार सम्प्रेषणले गर्दा सामाजिक सद्भावलाई नै खलल पुग्ने अवस्था आउन सक्छ । जसको उदाहरण नायिका मिरुना र भिक्षु फुर्वा काण्डलाई लिन सकिन्छ । दुई पक्षबीच मेलमिलाप भइसकेको अवस्थालाई पनि मिडिया तथा सामाजिक सञ्जालमा सरल पहुँचका कारण बढी विवादित बन्यो । कतिपयले यस्ता घटनालाई टिआरपी बढाउने स्वार्थगत अभिप्रायले पनि सामाजिक सञ्जाल दुरूपयोग गरेको पाइन्छ । यो पत्रकारका साथै पाठक, दर्शक, श्रोता सबैका लागि चुनौती हो ।

पत्रकारिता आकर्षणको क्षेत्र भए पनि जो कोही यो क्षेत्रमा टिकिरहन सक्दैन । रहर वा नामका लागि पत्रकार बन्नेहरू दुईचार महिना वा दुई चार वर्ष यो क्षेत्रमा रहे पनि विस्तारै रहर सेलाउँदै गएपछि हराउँदै जान्छन् । अर्कोतर्फ पत्रकारिताले नाम त दिन्छ तर आर्थिक रूपमा निर्भर हुन यो क्षेत्रमा निकै संघर्ष गर्नुपर्छ । आर्थिक रूपमा यो क्षेत्र त्यति भरपर्दो नभएकै कारण चाहँदा चाहँदै पनि सम्भावना बोकेका अब्बल पत्रकारहरू बाध्यतावश अन्य क्षेत्रमा पलायन भएका उदाहरण हाम्रो समाजमा धेरै छन् । अझ नेपालबाट बेलायतमा आएका नेपालीहरूका लागि बेलायत नामभन्दा पनि दाम कमाउनका लागि उर्वर देश मानिन्छ । नेपालमा मूलधारका सञ्चारगृहमा काम गरेर आएका केही पत्रकारहरू अझै पनि बेलायतमा

पत्रकारको रूपमा परिचित छन् तर महिला पत्रकारहरू भने नगण्य नै छन् । नेपालमा हुँदै बीबीसी नेपाली रेडियो सुन्ने गरेको हुँदा त्यहाँ महिला आवाजको अभाव खड्किन्थ्यो । नेपालबाट रिपोर्टिङ गर्ने बाहेक महिलाहरूको आवज कमै सुनिन्थ्यो ।

बेलायत स्थायी बसोवासपछि मेरो आबद्धता नमस्ते युरोपको दम्पती कार्यक्रम हुँदै त्यसताका बेलायतमा सञ्चालित एकमात्र टेलिभिजन नेपाली टिभीमा भयो । अडियोको मात्र अनुभव भएकाले भिजुअलका लागि शुरूमा अलिकति अप्ठ्यारो भयो । त्यति वेला नेपाली टिभीसँग संगीता मरहट्टा पहिले नै आबद्ध थिइन् । उनी बीबीसी नेपाली सेवा यूकेमा रेडियो प्रस्तोताको रूपमा बेलायत आए पनि हाल अन्य व्यवसायमा व्यस्त छिन् । पछि हामी केही अन्य व्यक्ति मिलेर बेलायतमा बढ्दै गरेको नेपाली समाजलाई मद्देनजर गर्दै आनै मिडिया गोर्खा च्यानल स्थापना गऱ्यौं । बेलायतमा नेपालीहरू स्थायी रूपमा बस्ने सरकारी व्यवस्थाका कारण नेपाली जनसंख्या दिनानुदिन बढ्ने हुनाले उनीहरूलाई नेपालसँग जोडिरहने सेतुको रूपमा गोर्खा च्यानललाई स्थापित गराउने उद्देश्य थियो ।

बेलायतमा बढ्दै गएको नेपाली समाजले गरेका गतिविधिहरू, नेपालीहरूले पाएका सफलताहरू, फस्टाएका व्यापार व्यवसायको प्रचार प्रसार तथा संघर्षशील नेपालीहरूको कथाव्यथा गोर्खा च्यानलले प्रस्तुत गर्न थाल्यो । महिला पत्रकारहरूका लागि राम्रो प्लाटफर्म बन्यो । उनीहरूको दक्षतालाई च्यानलमा आबद्ध गराउँदै पत्रकारितातर्फ प्रोत्साहित गराउने क्रममा प्रतिमा गुरूङ, शशि थापा सुब्बा, लक्ष्मी राई (लारा), प्रसूना कँडेल, निशा गुरूङ लगायतको सहभागिता रह्यो । हुनत शशि थापा सुब्बा र लक्ष्मी राई (लारा) साहित्यिक क्षेत्रमा परिचित नाम हो भने प्रसूना कँडेल कलाकारको रूपमा परिचत नाम हो । त्यति वेला बीबीएन वर्ल्ड टिभीमा निरा पीजीको सक्रिय सहभागिता थियो । उनी कुशल गीतकार भए पनि पत्रकारितातर्फ उन्मुख हुँदै नेपाली समुदायका गतिविधिलाई बीबीएन वर्ल्ड टिभीमार्फत प्रस्तुत गर्थिन् तर सबैको निरन्तरता भने रहेन ।

बेलायतमा नेपाली रेडियो पत्रकारितामा भने महिला आवाज निकै छन् । ब्रिटिश फोर्सेज ब्रोडकास्टिङ एसोसिएसन, यूके (बीएफबीएस) गोर्खा रेडियो नेपालीहरूका लागि धेरै परिचित रेडियो स्टेशन हो । बेलायत सरकारले आफ्नो सेनामा कार्यरत गोर्खा तथा उनका परिवार र समुदायका लागि नेपाली भाषामा कार्यक्रम प्रसारण गर्दछ । त्यहाँ कार्यरत महिलाहरू प्रायः नेपाली ब्रिटिश आर्मीका परिवारहरू छन् । बीएफबीएस रेडियो ब्रुनाईबाट पनि प्रसारण हुन्छ । रूपा राना, सिरीष सुनुवार, आशा पुन, आरति गुरूङ, हीरा छन्त्याल, निशा गुरूङ, प्रेक्षा गुरूङ, सुसनवाला राई लगायतका महिलाहरू आफैं पनि गोर्खा रेडियोमा सक्रिय छन् । सन् १९९७ सम्म बेलायती सेना हङकङमा हुँदा त्यहाँबाट पनि बीएफबीएस रेडियो प्रसारण हुन्थ्यो । हङकङ र ब्रुनाईमा कार्यरत आर्मीले सामान्यतया आफ्नो परिवारलाई तीन वर्षसम्म आफ्नो साथमा



राख्न पाउँछन् । यसरी श्रीमान्सँग पल्टनमा रहेका वेला धेरै महिलाले बीएफबीएस रेडियोमा काम गरेका छन् ।

धेरै महिलाहरूले पत्रकारिता सम्बन्धी विभिन्न तालिम लिएर पत्रकारमा हुनुपर्ने गुण तथा क्षमता अभिवृद्धि पनि गरेका छन् तर हङकङ र ब्रुनाईमा तीन वर्षभन्दा बढी बस्न नपाउने बेलायती नीतिका कारण उनीहरू नेपाल फर्किएपछि घर व्यवहारमै सीमित भएका छन् । केहीले नेपालको मूलधारका मिडियामा काम पनि गरेका छन् । सिरीष सुनुवार रेडियो नेपालमा र मीना गुरूङले नेपाल टेलिभिजनमा काम गरिन् तर हाल भने मीना गुरूङ अन्य पेशामा लागिन् भने सिरीषले गोर्खा रेडियोमा निरन्तरता दिइरहेकी छिन् । २०४६ सालको आन्दोलनपछिको प्रेस स्वतन्त्रतासँगै छ्यासछ्यास्ती खुलेका एफएम रेडियोहरूमा समेत धेरैले काम गरेका छन् ।

बेलायत सरकारले आवासीय भिसाको व्यवस्था गरेपछि धेरैजसो अवकाशप्राप्त बेलायती सैनिकका परिवारहरू बेलायत आएर बस्न थालेका छन् । सोही क्रममा पहिले बीएफबीएसमा काम गरेका महिलाहरूले फेरि रेडियोमा काम गर्न थाले भने सुधा गुरूङ, शिव गुरूङ, देवी लिम्बु, सपना प्रधान लगायतका महिला बेलायतमा आएर अन्य पेशामै रमाएका छन् । सामुदायिक रेडियो बीजीडब्ल्यूएसमा महिलाको ठूलो सहभागिता रह्यो । प्रमिला लाबुङ राई, गोमा राना, जमुना गर्बुजा, पुष्पा गुरूङ, लीला सेलिङ मावो, शान्ति लिम्बु लगायतका महिलाहरूले स्वयंसेवककै रूपमा विभिन्न कार्यक्रम चलाए । रेडियो राइनोमा पनि महिला सहभागिता रहेको थियो । 'हाम्रो यात्रा' नामक अंग्रेजी र नेपाली भाषामा पोडकाष्ट कार्यक्रम सञ्चालन गर्ने संकल्प गुरूङ बेलायतका युवाहरूमाझ चर्चित बनिन् ।

सूचना र सञ्चारको क्षेत्रमा प्रविधिको विकाससँगै अनलाइन न्यूज पोर्टलहरू छापाभन्दा धेरै प्रचलित छन् । बेलायतबाट सञ्चालित अनलाइन न्यूज पोर्टलहरूमध्ये वीनेपाली डटकममा सहसम्पादकको रूपमा फातिमा बानु, लण्डन नेपाल न्यूजमा रिपोर्टरको रूपमा जेनी भट्टराई, सीलिचुङमा विमला लिम्बु,

गोर्खा मिडियामा अतिथि लेखकका रूपमा गोरी तमु, माया गुरूङ, जानुका लिम्बु, सिलौटी टाइम्समा सहसम्पादकमा जमुना सापकोटाको नाम लेखिए पनि सक्रियता देखिदैन भने अन्य अनलाइन पोर्टलहरूमा महिलाको नाम समेत छैन । यो तथ्यांकले पनि बेलायतमा पत्रकारिता क्षेत्रमा महिलाको नाम देखिए पनि सक्रिय र दक्ष महिलाको अभाव देखिन्छ । बेलायतमा पत्रकारितामा महिलाहरूको सहभागिता फितलो देखिए पनि गीत, गजल, कविता, कथा, उपन्यास जस्ता साहित्यका विविध विधामा कलम चलाउने महिलाहरू अब्बल देखिएका छन् । आनै यूट्यूब च्यानल चलाएर समाजलाई मनोरञ्जन दिन सफल भएका छन् ।

बेलायतमा महिला पत्रकारहरूको चुनौती र अवसरको चर्चा गरौँ । नेपाल पत्रकार महासंघ, यूके र नेपाल आदिवासी जनजाति पत्रकार महासंघको गठनपछि पत्रकारितामा रूचि राख्ने तथा पत्रकारितालाई पेशा बनाउन चाहने महिलाको संख्या बढ्दै गएको छ । विदेशमा आफनो संस्कृति, वेषभूषा, भाषा लिपि र पहिचानकै रक्षार्थ पनि महिलाहरू लेख्न र बोल्न चाहन्छन् तर घरपरिवार र कामको दोहोरो जिम्मेवारीका कारण महिला पछि पर्ने गरेका छन् । नेपालका महिला पत्रकारहरूको चुनौती र बेलायतका महिला पत्रकारहरूको चुनौती भौतिक रूपले केही फरक भए पनि उही नेपाली सामाजिक मानसिकता बोकेका हामी नेपाली नै यहाँ भएकाले महिलालाई हेर्ने दृष्टिकोणमा फरक छैन । पश्चिमी राष्ट्रमा बसे पनि हामी महिलाकै सोचमा परिवर्तन आएको छैन । महिलाले घरबाट निस्कन र घर पुग्ने समयसीमा आफैँले तय गर्नुपर्छ । आउने जाने टुंगो भएन भने नराम्रो दृष्टिले हेरिन्छ भन्ने मानसिकताबाट हामी निस्कन सकेका छैनौं । रिपोर्टिङका लागि जतिवेला पनि तयार भएर बस्नुपर्ने र कहिले काहीं राति अबेरसम्म रिपोर्टिङका लागि अफिस वा बाहिर बस्नुपर्ने, आफ्नो साधन नभएका वेला जो कोहीसँग पनि बाहिर जानुपर्ने, कार्यक्रममा जाँदा साथ पाए पनि फर्किन साथ नपाउने, रिपोर्टिङका क्रममा सबै पुरूष मात्र हुने, महिला नगण्य हुने, लैंगिक समानताको कुरा जति नै गरे पनि विभेद हुने, महिलाको क्षमता र अस्तित्व स्विकार्न नसक्ने, महिलाको कामको मूल्यांकन तथा प्रोत्साहन नहुने जस्ता तथ्यहरू त छँदै छन् । अर्को महत्वपूर्ण पाटो आर्थिक पक्ष हो । बेलायत जस्ता ठाउँमा एकजनाको कमाइले मात्र घरव्यवहार धान्न गाह्रो हुन्छ । यहाँका सञ्चारगृहले राम्रो पारिश्रमिक दिन सक्दैनन् । उनीहरूले पाउने रकमभन्दा बढी सजिलै अन्य काम गर्दा पाउँछन् । त्यसैले पनि परिवार चलाउनका लागि बाध्यतावश यो पेशालाई त्याग्नु परेको छ । पूर्णकालीन पत्रकार भएर केही वर्ष मैले काम गर्दा रिपोर्टिङका क्रममा महिला भएकै कारण धेरै पटक म पछि परेकी छु । एउटा घटना सुनाउँछु - 'गैरआवासीय नेपाली संघ, अन्तरराष्ट्रिय समन्वय समितिको महाधिवेशनका वेला थियो । निर्वाचनको वातावरण, उम्मेदवारहरूको ककस, मतदाता प्रतिनिधिहरूको बहस, पत्रकारहरूको हैसियत लोभलाग्दो थियो । अफ्र महिला पत्रकार भनेर छुट्टै महत्व थियो । निर्वाचन परिणाम घोषणाको सभामा रिपोर्टिङका लागि म मात्र महिला पत्रकार थिएँ । रातको साढे २ बजेको कार्यक्रममा सबै पुरूष पत्रकारहरू थिए । अन्य व्यक्ति पनि सहभागी थिए । रातको कार्यक्रम भएकाले केही व्यक्ति हल्का नशामा पनि थिए । लामो पर्खाइपछि नवनिर्वाचित अध्यक्षको आगमन भयो तर उनको भिडियो खिच्न र बाइट लिन मैले पाइनँ । सबै पुरूष पत्रकारहरूले मलाई पछाडि धकेलेर पेलपाल पार्दै अगाडि गए । म महिला भएकै कारण त्यो पुरुष पत्रकार भीडलाई ठेल्न सकिनँ । यो भीडको मौकालाई सदुपयोग गर्दै अनावश्यक नजिकिएका पुरूषस्पर्शहरूलाई झेल्न सकिनँ । त्यति वेला मैले सम्झिएँ यो भीड महिला पत्रकारको भएको भए म पनि उनीहरू जस्तै शारीरिक शक्ति प्रयोग गरेर अगाडि जान्थेँ र आफ्नो काममा सफल हुने थिएँ ।' हाम्रो समाजमा यस्तो अनुभूत गर्ने अन्य महिला पत्रकार पनि धेरै होलान् । यस्ता घटनाले महिला पत्रकारहरूलाई हतोत्साहित बनाउँछ । यस्ता खालको लैंगिक हिसाबाट बच्न महिला पत्रकारले सचेत भएर काम गर्नुपर्ने अवस्था छ ।

महिलाहरूका लागि पत्रकारिता चुनौतीपूर्ण पेशा हो भने अवसर पनि हो । यसले चुनौती सामना गर्ने क्षमता विकास गराउँछ । आनै नाम र पहिचान दिन्छ जसले आत्मविश्वास बढ्छ । आफूलाई पत्रकारको रूपमा अपटुडेट राख्न अध्ययनशील बनाउँछ । आफूले गरेको कामको समाजले मूल्यांकन गर्ने हुँदा सकारात्मक टिप्पणीहरूले सन्तुष्टि तथा काम गर्ने थप ऊर्जा दिने गर्दछ । अन्य पेशा वा क्षेत्रमा नाम कमाउन वर्षौं लाग्न सक्छ तर मिडियामा छोटो समयमा पनि लगनशील भई मेहनतका साथ काम गरेमा नाम कमाउन सकिन्छ । अफ्र महिला भएकै कारण कतिपय संघ संगठन, राजनीतिक दलहरू, व्यवसायीहरू तथा व्यक्तित्वहरूले बढी प्राथमिकता पनि दिने गर्दछन् जसले गर्दा सूचना तथा विवरण प्राप्त गर्न र विज्ञापन पाउन सजिलो हुन्छ । यो पेशामा उमेरको हदबन्दी नभएका कारण आफ्नो इच्छा र जीवनले साथ दिएसम्म सक्रिय हुन सकिन्छ ।

विश्वकै चरम विकसित राष्ट्र तथा सञ्चारका लागि स्वर्ग मानिने बेलायतमा रहेका नेपाली दिदीबहिनीको पत्रकारिता क्षेत्रमा आफ्नो हैसियत देखाउने जिम्मेवारी अब नयाँ पुस्ताको काँधमा छ । बेलायती नेपाली समाजले मात्र पूर्णकालीन पत्रकारितामा आधारित पत्रकारहरू बचाउन सक्दैन, त्यसैले अन्तरराष्ट्रियस्तरका पत्रकारहरू जन्मिन बेलायतमा रहेका युवा नै आकर्षित हुनुपर्छ । अनुभवले खारिएका मात्र नभई पत्रकारिता विषय नै अध्ययन गरेका नयाँ पिढीहरूले मात्र यो क्षेत्रमा सफलता हासिल गर्न सक्छन् । पत्रकारिताको व्यावसायिक आचारसंहितालाई पालना गर्दै समयसापेक्ष तालिमहरू तथा सेमिनार आयोजना गर्दै उनीहरूलाई आकर्षित तथा उत्प्रेरित गर्नु पत्रकार महासंघको दायित्व पनि हो । •

*(लेखक शाखाकी पूर्व उपाध्यक्ष एवम् वर्तमान केन्द्रीय प्रतिनिधि हुन्।)*

# पत्रकारितामा महिला सहभागिता र चुनौतीहरू



**प्रमिला लाबुङ राई**

**इतिहासलाई** फर्केर हेर्दा सन् १८५० मा नेपालका तत्कालीन प्रधानमन्त्री जंगबहादुर राणाले बेलायत भ्रमण गरेपछि कूटनीतिक वा राजनीतिक रूपमा नेपालीहरू बेलायत आउन थालेको देखिन्छ । इष्ट इण्डिया कम्पनीमा गोर्खा भर्ती शुरु भएको २०० वर्षभन्दा बढी भए पनि बेलायतमा औपचारिक रूपमा सन् २००४ सालमा बेलायत सरकारले अवकाशप्राप्त भूतपूर्व गोर्खा सैनिक र उनका परिवारहरूलाई बेलायतमा आवासीय भिसा दिएपछि बेलायतमा गोर्खाली सिपाही अनि उनीहरूका परिवार स्थायी रूपमा बसोवास गर्न थालेका हुन् । भूतपूर्व गोर्खा सैनिक परिवारहरूले स्थायी बसोवास गर्न शुरू गरेपछि नेपालीहरूको संख्या ह्वात्तै बढेको हो । यसरी नेपालीहरूको आफ्नो थातथलो छोडेर आउँदा आफू मात्रै आएनन् आफूसँग आफ्नो कला, भाषा, साहित्य, संस्कार र संस्कृति पनि लिएर आए । नेपालीहरूको बढ्दो क्रमसँगै विभिन्न संघ संस्थाहरूको आवश्यकतासँगै मिडिया पनि अत्यावश्यक थियो । यद्यपि गोर्खाली पल्टनहरूको पल्टनिया सिपाही र उनीहरूको परिवारहरूका निम्ति सुदूर पूर्व एशियामा रहँदादेखि नै बीएफबीएस गोर्खा रेडियो अनि पर्वते नामक मासिक पत्रिका सञ्चालनमा रहेको थियो ।

यसै क्रममा नेपालीपत्र साप्ताहिक, नयाँ सन्देश साप्ताहिक, एभरेष्ट टाइम्स जस्ता खबर पत्रिका सञ्चालन शुरू हुन थाले । नेपाली समाजको बढ्दो क्रम र आवश्यकता महसुस गरेर सन् २००६ सालमा नेपाली कम्यूनिटी रेडियो 'रेडियो बीजीडब्ल्यूएस' पनि सञ्चालनमा ल्याइयो । मिडियाको बढ्दो क्रम र डिजिटल युगको विकाससँगै छापा पत्रिकाहरू अनलाइन पोर्टलमा रूपान्तरित हुन थाले भने गोर्खा टेलिभिजन यूके पनि सञ्चालनमा आए । यही शृंखलाबद्ध नेपाली मिडियाहरूको विकासक्रमले बेलायतमा नेपाली पत्रकारको संख्या पनि दिनानुदिन वृद्धि भयो । क्रमिक रूपमा भएको विकासक्रमसँगै सम्पूर्ण पत्रकारलाई ऐक्यबद्ध गर्ने उद्देश्यले सन् २०१० सालमा नेपाल पत्रकार महासंघ बेलायतको स्थापना भयो । त्यसपछि जनजाति समुदायका पत्रकारलाई पनि एकताबद्ध गर्दै पत्रकारहरूको संख्या वृद्धि गर्ने उद्देश्यले सन् २०१३ सालमा नेपाल आदिवासी पत्रकार महासंघ (फोनिज) को स्थापना भयो । नेपाल पत्रकार महासंघ बेलायत शाखामा ४३ जना सदस्य रहेकोमा महिला पत्रकार ७ जना मात्र रहेका छन् । जनजाति पत्रकार महासंघ बेलायत शाखाका सदस्य ४९ जना रहेकोमा १२ जना महिला पत्रकारहरू रहेका छन्, जो आफैँमा न्यून हो ।

**चुनौतीहरू:**

सूचनाको स्रोतमा पहुँचको निम्ति नेपाली महिला पत्रकारले भोगिरहेका विशेष समस्या हुन् । त्यसमा पनि पत्रकारिता आफैँमा चुनौती हो र अझ बेलायतको नेपाली पत्रकारिता क्षेत्रलाई नियालेर हेर्दा अति नै चुनौतीपूर्ण छ । विभिन्न कारणले पत्रकारिता पेशागत रूपले व्यावसायिक बन्न सकेको छैन । सबैले आफ्नो रोजीरोटी पकाएर बाँचेका समयमा स्वयंसेवकको रूपमा यो पेशालाई निरन्तरता दिइरहेका छन् । अझै महिलाहरूको हकमा भनै चुनौतीपूर्ण रहेको छ । आफ्नो व्यक्तिगत अनि घरेलु समस्या सुल्झाउनु, रोजीरोटीको निम्ति ड्युटीको व्यस्तताबाट समय निकालेर शोखको रूपमा पत्रकारिता गर्नुपर्ने कारणले पनि यो पेशामा नारी सहभागिता कम रहेको पाइन्छ ।

त्यसमध्ये केही बुँदागत समस्या र चुनौतीहरू यसप्रकार रहेका छन् :-

१. आर्थिक संकट
२. सामाजिक र राजनीतिक दबाव
३. दक्षता र कमी कमजोरी
४. भौतिक पूर्वाधारको कमी
५. पेशागत असुरक्षा, लैंगिक विभेद
६. व्यवसायीकरण नहुनु
७. अस्पष्ट नीति नियम
८. डिजिटल विभाजन र सीपको कमी

पछिल्लो समयमा कोरोनाको महामारीले बेलायत पनि अछुतो रहेन । लगभग एक लाख २९ हजार मानिसले ज्यान गुमाए । कोरोनाको चपेटामा परी केही साप्ताहिक पत्रिका बन्द भए । अहिले बेलायतको सिंगो समाज अनलाइन खबर, बीएफबीएस रेडियो र बीबीसी रेडियोको आधा घण्टाको प्रसारण सेवामा मात्र सीमित छन् । नेपाल पत्रकार महासंघ केन्द्रको तथ्यांक अनुसार पत्रकारहरूको कुल सदस्य संख्या १३,०५० छ ।

त्यसमा महिला पत्रकारहरू २,३४५ जना छन् । यो तथ्यांक हेर्दा १८% महिला यो पेशामा आबद्ध भएको पाइन्छ । सन् २०१६ सालमा सञ्चारिका समूहले राष्ट्रव्यापी रूपमा एउटा अनुसन्धान गरेको थियो । यो अनुसन्धानको तथ्यांक अनुसार २५% महिलाहरू पत्रकारिता क्षेत्रमा सहभागी रहेको पाइन्छ भने २१% महिला पत्रकारहरू राजधानीमा र २६.७% मोफसलमा रहेको पाइन्छ र अरू महिला विभिन्न मिडियामा आबद्ध छन् । कोभिडको पहिलो संक्रमणपछि मिडिया एडभोकेसी ग्रुपले गरेको अनुसन्धानअनुसार महिलाहरूलाई मूलतः आर्थिक र मनोवैज्ञानिक असर धेरै परेको छ । यही अनुसन्धानको तथ्यांकअनुसार ८७% महिलालाई मनोवैज्ञानिक असर र ६३% महिलालाई आर्थिक असर परेको छ । कोभिडका कारण सञ्चारक्षेत्रलाई पनि धेरै असर परेको छ । ठूलठूला सञ्चारगृहले पनि विज्ञापन पाउन सकेका छैनन् र धेरैले आफ्नो नोकरी गुमाउनु परेको अवस्था छ । विज्ञापन कम आएको कारण मूलधारका सञ्चारमाध्यम बन्द हुने क्रम जारी छ । मिडिया एडभोकेसी ग्रुपकै अनुसन्धान तथ्यांक अनुसार ४२% महिला पत्रकारहरू सबै प्रकारको बिटमा, २२% सामाजिक बिटमा, १५% राजनीतिक बिटमा, ५% शिक्षा बिटमा, ३% मनोरञ्जन बिटमा, ३% आर्थिक, १% खेलकुद र ८% अन्य बिटमा महिला पत्रकारहरूको सहभागिता रहेको छ ।

२०४६ सालको परिवर्तनपछि नेपालमा कान्तिपुर मल्टीमिडियादेखि टेलिभिजन, रेडियो, अनलाइन, दैनिक अनि साप्ताहिक पत्रपत्रिका, यूट्युब च्यानलहरू खोलेर मिडियाको संख्या ह्वात्तै बढेका कारणले पनि महिला सहभागिता वृद्धि भएको हो । पत्रकारिता आफैँमा न पुरुष न महिला यसको कुनै लिङ्ग हुँदैन तर कुनै पनि मिडिया क्षेत्रमा महिला पुरुष र अल्पसंख्यकहरूमा पूर्ण समावेशी आउन जरूरी छ । विडम्बना अहिलेसम्म पनि राष्ट्रिय स्तरका मिडियाहरूमा पर्याप्त रूपमा नेपाल टेलिभिजन, रेडियो नेपाल, गोरखापत्र र राष्ट्रिय समाचार समितिमा महिला नेतृत्व हुन सकेको छैन । ● *(लेखक शाखामा उपाध्यक्ष छन्।)*

# नेपाली पत्रकारितामा नयाँ पुस्ता



फडिन्द्र भट्टराई

**बेलायतमा** डेढ लाखभन्दा बढी नेपाली भएको तथ्यांक आँकलन गरिन्छ । यो नेपालबाट स्थानान्तरण भएको पहिलो पुस्ताको बसाइँ स्थायी रूपमा यता बेलायततिर भइरहँदा विदेशी माटोमा नेपाली संस्कार र परम्पराको जगेर्ना गर्ने पुस्ता पनि यही नै भएको छ । यो यस्तो पुस्ता हो, जसको भौतिक शरीर यता भए पनि यस्तो लाग्छ उनीहरूको तन र मन सबै नेपालसँग जोडिएको छ । नेपाली संस्कार परम्परा र रीति रिवाज जीवित राख्नका लागि नेपालभन्दा यता बेलायततिर अझै बाक्लै नेपाली चाडपर्व, मेला र मौलिकता झल्किएको पाइन्छ । त्यति मात्र होइन संस्थागत र व्यक्तिगत रूपमा पनि नेपालको आफ्नो गाउँ, ठाउँ जिल्ला समाजमार्फत नेपालमा चाहे विकास निर्माण, दैवी विपत्ति अथवा जस्तोसुकै आवश्यकता किन नहोस् यहाँका नेपाली सहयोगमा जुटी हाल्छन् । बेलायतमा मात्रै झन्डै ३ सयभन्दा बढी नेपाली संघ संस्थाहरू क्रियाशील रहेको बताइन्छ । यी सबै संघ संस्थाले कुनै न कुनै रूपमा आफ्नो भूमिका निर्वाह गरेका छन् ।

यसैमा प्रसंग बेलायतमा नेपाली पत्रकारिताको । नेपालको विरासत बोकेर बाँचेको नेपाली समुदायको केन्द्रविन्दुमा यहाँको नेपाली पत्रकारिता पनि रहेको छ । नेपालका मूलधारका मिडियामा आबद्ध भएर यहाँको नेपाली समुदायका क्रियाकलापलाई नेपाली मिडियाको रूपमा नेपालमा सम्प्रेषण गर्ने कुरा एकातर्फ छ भने अर्कोतर्फ स्थानीय नेपाली मिडियाका न्यूज पोर्टलहरूले स्थानीय रूपमा प्रायः सबैजसो गतिविधिलाई समाचारको रूपमा समेट्ने कुरामा कुनै कमी छैन भन्दा फरक पर्दैन । त्यस्तै समाज र समाज सेवाको रूपमा भए गरेका विसंगति र विकृतिहरूलाई समेत बेलायतस्थित नेपाली मिडियाले समेट्दै आएका छन् । एकाध दर्जन नेपाली न्यूज पोर्टल अथवा श्रव्यदृश्यको रूपमा विभिन्न माध्यमद्वारा यहाँको पत्रकारिताले आफ्नो धर्म निभाएको छ ।

समाचार वा रिपोर्टको रूपमा सकारात्मक वा नकारात्मक कुनै कुरा आउँदा पनि सामुदायिक रूपमा मिडियाको महत्व विशेष रहन्छ भने त्यो नेपाली डायस्पोरा नै हो । संगठनात्मक रूपमा एनआरएनदेखि लिएर सबै खाले टोले संघ संस्थाहरूको क्रियाकलापको फेहरिस्त प्रायः बेलायतमा बस्ने पत्रकारहरूले आफू आबद्ध मिडियामा

> “अहिले कभर भएको पत्रकारिता पहिलो पुस्तामा धेरै प्रभावकारी देखिए पनि नयाँ पुस्ताको पहुँचमा समेत पुग्न नसकिरहेको परिप्रेक्ष्यमा उनीहरुबाटै लेखन र रिपोर्टिङको शुरुवात हुनु जरुरी छ ।”



सम्प्रेषण गर्ने गरेका छन् । सायद यसैले होला यहाँको नेपाली समुदाय नेपाली पत्रकारितासँग बलियो गरी जोडिएको छ ।

तसर्थ बेलायतको नेपाली समुदायले सामुदायिक पत्रकारिताको महत्व राम्रोसँग बुझेको छ र नेपाली पत्रकारहरूले पनि आफ्नो रूचिकर अभ्यासलाई कायम राख्दै 'अम्याचर' रूपमा भए पनि पत्रकारिताको धर्म कायम राखेका छन् । यो अर्थमा बेलायतका नेपाली पत्रकार, नेपाली मिडिया र यहाँस्थित नेपाली समुदाय अन्तरसम्बन्धित रहेका छन् । पत्रकार आफैँ गैरआवासीय नेपालीको रूपमा रहेर पनि समुदायकै एक अभिन्न अंगको रूपमा छन् । मिडियाको महत्व समुदायले रामरी बुझेको छ भने सामुदायिक विकासको स्वअंगको रूपमा पत्रकारले पनि समुदायको महत्वलाई आत्मसात गरेको पाइन्छ । अर्थात् दुवैले आ आफ्नो महत्व, अस्तित्व र अन्तरसम्बन्धलाई आत्मसात गरेका छन् । अर्थात् समुदाय र मिडिया सहअस्तित्वको रूपमा अगाडि बढेको देखिन्छ ।

यसै सन्दर्भमा बेलायतको नेपाली समुदायमा नयाँ पुस्ताको उदय हर्लक्कै बढेर गएको छ । नयाँ पुस्ताका किशोरकिशोरी पनि आफ्नो अभिभावकले बोकेको नेपाली विरासत जसोतसो धान्ने प्रयासमा पनि छन् । भाषागत कठिनाइका साथै आफ्नो परम्परा र संस्कृतिलाई यो हुर्कदो पुस्ताले पनि जीवनको अभिन्न अंगको रूपमा स्विकारेका छन् र त्यसै अनुरूप उनीहरूको जीवन शैलीले पनि केही हदसम्म झल्काउँछ । आफ्नो सन्तानहरूको नेपालसँगको नाता कतै चुँडिहाल्छ कि भन्ने पीर अभिभावकीय पुस्तामा छ ।

नयाँ पुस्ताले आफूलाई सामाजिक अथवा सामुदायिक बनाउने सवालमा धेरै मात्रामा सामाजिक सञ्जालको प्रयोगमै अभ्यस्त रहेको पाइन्छ । तुलनात्मक रूपमा पुरानो पुस्ता जस्तो नेपाल र नेपाली शैलीको संगठन बनाउने र यसमा क्रियाशील हुने कुरामा यहाँको नयाँ पुस्ता त्यति सक्रिय भने छैन । तथापि नेपाली समुदायले आयोजना गर्ने ठूला 'स्केल' का कार्यक्रमहरूमा उनीहरूको बाहुल्य देखिन थालेको छ । समाज र संस्थाहरूका गतिविधिहरू सम्प्रेषित समाचारबाट केही हदसम्म उनीहरू पनि सुसूचित भने हुने गरेका छन् । समाचार, रिपोर्ट वा मिडिया सम्प्रेषित सामग्रीको पहुँचमा नेपाली भाषाको राम्रो ज्ञानको कमी भने उनीहरूको लागि एउटा तगारो जस्तै बन्ने गरेको छ ।

यी तथ्यहरूलाई केलाएर हेर्दा बेलायतको हुर्कदो नेपाली पुस्तालाई नेपाली सामुदायिक पत्रकारितामा सहभागी गराउनुपर्ने आवश्यकता देखिएको छ । सामाजिक सञ्जालमार्फतका भिडियो, फोटोग्राफी जस्ता विधामा त्यो पनि संस्थागत भन्दा व्यक्तिगत तहको रिपोर्टिङमा मात्रै सीमित रहेको यो पुस्तालाई पेशागत तहकै रिपोर्टिङ र लेखनमा ल्याउनुपर्ने टड्कारो खाँचो छ । अहिले 'कभर' भएको पत्रकारिता पहिलो पुस्तामा धेरै प्रभावकारी देखिए पनि नयाँ पुस्ताको पहुँचमा समेत पुग्न नसकिरहेको परिप्रेक्ष्यमा उनीहरूबाटै लेखन र रिपोर्टिङको शुरूवात हुनु जरूरी छ ।

रिपोर्टिङ र लेखनको विशेषतः नेपाली भाषागत समस्याको कुरा प्रमुख रहेको छ । चाहे त्यो अंग्रेजी भाषामै किन नहोस् पत्रकारको रूपमा लेखन र सम्प्रेषणमा उनीहरूलाई संलग्न गराउन सकियो भने भावी दिनमा यहाँको नेपाली समुदायलाई नेपाल र नेपालीसँग जोड्नेदेखि समग्र सामुदायिकताको विकास हुनेछ । यसले गर्दा पुस्तान्तरसँगै भविष्यमा कुनै न कुनै रूपमा नेपाली पत्रकारिता दिगो रूपमा सञ्चालन हुनेछ । अन्यथा समयको चक्रसँगै पुरानो पुस्ता मात्रै सामाजिक संघ संस्थाको आत्मरतिमा रमाए जस्तै भविष्यको कालखण्डमा यहाँको पत्रकारिता समेत हराएर जाने कुरा अवश्यंभावी छ ।

पढ्दा वा सुन्दा सामान्य जस्तै लाग्ने यो विषय यहाँको नेपाली समुदायका लागि र परिणामगत हिसाबले नेपाल र समग्र नेपालीसँग समेत प्रकारान्तरमा यो सवालले अत्यन्तै दूरगामी महत्व बोकेको छ । यसका लागि विशेषतः अभिभावकहरूको खास भूमिका रहन्छ । आफ्नो सन्तानलाई नेपाली भाषा र नेपाली समुदायमा जोडीराख्न उत्प्रेरणा दिने भनेको प्रथमतः अभिभावकले नै हो । त्यसैगरी पत्रकारिता तथा सामाजिक अभियानमा सक्रिय व्यक्ति वा संघ संस्थाहरूले उनीहरूमा पत्रकारिताको महत्व बुझाउँदै उत्प्रेरणा जगाउने कार्यमा लाग्नुपर्ने हुन्छ ।

पत्रकार महासंघ बेलायतले आफ्नो दशौँ वार्षिकोत्सव मनाइरहेको परिप्रेक्ष्यमा संघले बेलायतमा पत्रकारिताको भविष्य र अस्तित्वसँग जोडिएको यस्तो महत्वपूर्ण र गम्भीर विषयमा पहलकदमी लिनु वाञ्छनीय छ । यसका लागि एकातिर विभिन्न तालिम सेमिनार आयोजना गर्दै लेखन र सूचना सम्प्रेषणमा नयाँ पुस्तालाई आबद्ध गराउँदै लैजानुपर्ने हुन्छ भने अर्कोतिर अलिकति यो क्षेत्रमा रूचि देखाएका सम्भावित तन्नेरीहरूलाई प्रोत्साहन गर्दै जाने नीति अवलम्बन गर्नुपर्ने हुन्छ । वास्तवमा यो विषयको महत्व बेलायतको हकमा मात्र नभएर स्थायी रूपमा नेपालीहरू बसोवास भएका यूरोप, अमेरिका, अष्ट्रेलिया लगायतको समग्र नेपाली डायस्पोरामा समुदाय, सामाज र पत्रकारिताको भविष्य तथा अस्तित्व जोडिएको छ । सबैले मनन गरौँ । ●

*(लेखक शाखाका सल्लाहकार हुन्।)*

# दोस्रो पुस्ताले के सोच्छ ?



पवन कँडेल

**नेपाली** डायस्पोरामा पहिलो पुस्ता र दोस्रो पुस्ताबीच पुस्तागत ठूलो अन्तर छ । बेलायतको नेपाली पत्रकारिता जगत्ले पहिलो पुस्तालाई पर्याप्त रूपमा समेट्न सके पनि दोस्रो पुस्तासँगको दूरी घटाउन सकेको छैन । सर्वप्रथम त दोस्रो पुस्ता नेपाली पत्रकारितासँग परिचित नै छैन । केही हदसम्म नेपाली विषयवस्तु र नेपाली समाजका गतिविधिमा चासो राख्ने युवा पुस्ता (जो आफैं पनि सामाजिक अभियानहरूमा क्रियाशील छन्), उनीहरूले नेपाली पत्रकारिताको चरित्र, दायरा र खुबीलाई यसप्रकार मूल्यांकन गरेको मेरो बुझाइ छ ।

१) नेपाली पत्रकारिता, बेलायत अवस्थित नेपाली समाजको सक्रियता र गतिविधिलाई ध्यानाकर्षणमा ल्याउने सन्दर्भमा सफल ठहरिन्छ । प्रायः नेपाली समाजका सबै कार्यक्रममा कुनै न कुनै रूपमा (भिडियोग्राफर, अतिथि या अन्य कुनै) नेपाली पत्रकारलाई निम्तो दिइएको पाइन्छ । यो सफलता र सहजतामा बेलायत भौगोलिक रूपमा सानै भएर पनि टेवा पुगेको हो ।
अरू नेपाली डायस्पोराभन्दा ऐतिहासिक रूपले पुरानो र बढी व्यवस्थित भएकाले पत्रकारितालाई शोखको रूपमा समेत समय दिने क्षमताले नेपाली मिडियाले प्रोत्साहन पाएको छ ।

२) यति भन्दै गर्दा बेलायतको नेपाली मिडिया अझै पनि संक्रमणकालमा भएको र पूर्ण परिपक्क हुन अझै केही समय लाग्ने हामी सबैको बुझाइ हो । दोस्रो पुस्ताका बारेमा लेख्न टिप्पणी गर्न उक्त पुस्ताको समग्र तस्बिर हेर्न सक्नुपर्छ । त्यो अवसर लिन या चेतनाको विकासको गृहकार्य गर्ने मौका पत्रकारितामा सक्रिय नेपाली समूहले पाएको छैन ।

३) दोस्रो पुस्तक सन्दर्भमा नेपाली भाषाको लेखन-पढन छुटिसकेको हुनाले 'अंग्रेजी' भाषाका कारण पनि नेपाली पत्रकारितासँग दूरी कायम छ ।

४) अर्को मुख्य कारण आधुनिक मञ्च (प्लाटफर्म)हरूको प्रयोग हो । नयाँ पुस्ताले फेसबुक, यूट्यूब भ्लग, ब्लगिङ, लिंक्दइन, इन्स्टाग्रामलाई सार्वजनिक मञ्चको रूपमा प्रयोग गर्ने हुँदा परम्परागत पत्रकारिता कम सान्दर्भिक भएको पनि हो ।

५) एउटा खड्किएको विषय पत्रकारितामा मनपरी पनि हो । बेलायतमा पत्रकारितासँग जोडिएका व्यक्ति, पेजहरू र मिडियाका स्रोत जति भए पनि नाम चलेका या पढिने साह्रै थोरै संख्यामा छन् । ती मिडिया प्लाटफर्मले केही व्यक्ति, समूह वा आफू निकट संगठनलाई निरन्तर रूपमा प्राथमिकता दिने हुँदा उनीहरूले पस्केको (बेलायती) नेपाली समाजको चित्र नै अपूर्ण छ ।

यति भन्दै गर्दा डायस्पोरिक नेपाली पत्रकार र पत्रकारिताको भूमिका र विगतको योगदानको अवमूल्यन हुनुहुँदैन । एक अर्कासँग जोडिने इच्छाशक्ति दोस्रो पुस्ता र पत्रकार समाज दुवैले देखाउनु पर्छ । यसले नेपाली डायस्पोराको सामाजिक गतिशीलता बढाउनेछ । ●

*(लेखक मर्जिङ नेप्सोक्स अध्यक्ष हुन् ।)*

# दोस्रो पुस्ता र पहिचान संकट



विष्णु गैरे

**सन्** १८१५ को सुगौली सन्धिपछि शुरू भएको बेलायत र नेपालको सम्बन्ध २०० वर्षपछि आज पनि उत्तिकै आत्मीय छ । बेलायत बस्ने नेपालीको संख्या १ लाखभन्दा बढी हुनुले यो सम्बन्ध अझै गाढा हुँदै गरेको संकेत गर्छ । आफ्नो देशमा राम्रो रोजगारको अवस्था नभएपछि विदेशिएको पहिलो पुस्ताको मेहनतका कारण उनीहरूका सन्तान सामाजिक गतिशीलताको खुड्किलो चढ्न सफल भएका छन् र उत्कृष्ट कम्पनीहरूमा काम गर्दै आएका छन् । जसलाई दोस्रो पुस्ताका नेपाली भनेर पनि चिनिने गर्दछ र तिनै पुस्तामध्येको एक म पनि हुँ । तर आर्थिक समस्याबाट माथि उठिसकेपछि आजको पुस्तामा अझै महत्वपूर्ण प्रश्न उठ्ने गरेको छ ।

म को हुँ । आफ्नो आधारभूत समस्य समाधान हुँदै गएपछि आफ्नो अस्तित्वको खोजी गर्नु स्वभाविकै हो । मर्जिङ नेप्सोक्सको अभियानमा हिँड्दै गर्दा मैले दोस्रो पुस्ताका धेरै नेपालीसँग अन्तरसंवाद गरेको छु र हरेक अन्तरसंवादमा हामी आफूलाई ब्रिटिश भन्ने कि नेपाली भनेर बहस हुने गरेको मैले पाएँ । नेपाल जाँदा सबैले आफूलाई ब्रिटिश भनेर चिन्ने र बेलायतमा हुँदा सबैले नेपाली भनेर चिन्ने । यसैबीचको द्वन्द्वमा धेरैजसो दोस्रो पुस्ता दोधारमै बाँचिरहेको छ । धेरैजसोले आफूलाई बहुसांस्कृतिकको श्रेणीमा पनि राखेका छन् ।



पहिलो पुस्ताका नेपाली भने यो दोस्रो पुस्ताको पीडाबारे अनभिज्ञ देखिन्छन् । त्यसको मुख्य कारण पुस्तागत भिन्नतालाई मान्न सकिन्छ । बेलायतमा रहेका नेपाली सञ्चारमाध्यमको यसमा धेरै कमजोरी देखिन्छ । पुस्तागत खाडल कम गर्न सञ्चारमाध्यमले ठूलो भूमिका खेल्न सक्छ तर अधिकांश मिडिया दोस्रो पुस्तासम्म पुग्न असफल भएका छन् । अब बेलायतमा रहेका नेपाली सञ्चारमाध्यमले कसरी दुवै पुस्तासम्म पुग्ने र यो अन्तर कम गर्ने भन्ने विषयमा सोच्ने वेला भएको छ । ●

*(लेखक मर्जिङ नेप्सोक्समा आबद्ध छन् ।)*

# पत्रकारितामा नेपाली भाषाको प्रयोग



मञ्जु भण्डारी खरेल

**बेलायत** लोकतन्त्रको जननी हो । भाषा र साहित्यका दृष्टिले यो देश संसारप्रसिद्ध मानिन्छ । यहाँ विश्वप्रसिद्ध साहित्यकार विलियम शेक्सपियर तथा १८औं शताब्दीका प्रसिद्ध रोमान्टिक कविहरू विलियम वर्डस्वर्थ तथा से.टे. कलरिज जन्मिनुले पनि यो देशले प्रसिद्धि कमाएको छ ।

लिरिकल ब्यालेड (गीतिगाथा) यी दुबै कविको प्रसिद्ध रचना हो, जसलाई स्वच्छन्दतावादको घोषणापत्र भनिन्छ । अफ विश्वप्रसिद्ध नाटककार शेक्सपियरको नाट्यशैली संसारभरकै लागि अनुकरणीय छ । उनको ब्ल्यांक भर्सले संसारमा प्रसिद्धि पाएको छ । यसको अनुकरण नेपाली नाटककार बालकृष्ण समले गरेका छन् । अफ गोर्खा सैनिकको योगदानलाई उच्च सम्मान प्रदान गरी उनीहरूलाई सपरिवार बेलायतमा बस्ने प्रबन्ध बेलायत सरकारले मिलाएको छ । उनीहरूका कारणले नेपाली भाषा आज बेलायतमा विस्तार हुँदै गएको छ । बीबीसी नेपाली सेवाका माध्यमबाट बेलायत सरकारले नेपाली भाषाको उच्च सम्मान गरेको यथार्थ नेपाली भाषीले भुल्नुहुँदैन ।

पठनपाठनका क्रममा बेलायत प्रवेश गरेका व्यक्तिहरू पनि आज यहाँ विभिन्न व्यवसाय अँगालेर स्थायी बसोवास गरेका छन् । उनीहरूको कारणले पनि यहाँ नेपाली भाषा फैलिएको छ । हाल यहाँ करिब दुई लाख नेपाली छन् । यिनीहरूले प्रवासमा बसेर भए पनि नेपाली भाषासाहित्य तथा पत्रकारिताको सेवा गर्दै आएका छन् ।

बीबीसी नेपाली सेवामा आबद्ध केही पत्रकारहरू : खगेन्द्र नेपाली, रवीन्द्र मिश्र, सुमन खरेल, भगीरथ योगी, संगीता मरहट्टा लगायत वर्तमानमा कार्यरत साथीहरूबाट बेलायतमा नेपाली भाषाले मौलाउने मौका पाएको छ ।

नेपाली भाषाको इतिहासलाई नियाल्दा यो भाषाको जन्मस्थान यद्यपि जुम्लाको सिँजा भए पनि कालक्रमिक रूपमा क्रमशः पूर्वी नेपालको भाग हुँदै भारतको दार्जीलिङ, म्यान्मा, भुटान, बेलायत, अमेरिकामा फैलिने अवसर पाएको छ ।

## पत्रकारिता

नेपाली पत्रकारिताको इतिहासलाई नियाल्दा बहुआयामिक प्रतिभाका धनी जयपृथ्वीबहादुर सिंहबाट यसको प्रारम्भ भएको देखिन्छ । उनी बझाङी राजा विक्रमबहादुर सिंह र उनकी रानी रुद्रकुमारीका सन्तान थिए । नेपालको सुप्रसिद्ध पत्रिका गोरखापत्रका उनी वि.सं. १८५८ मा प्रधानसम्पादक बने । यसैका माध्यमबाट उनले देशभर नागरिक चेतनाको विस्तार गरे तर उनका ससुरा चन्द्र शमशेरलाई यो गतिविधि मन परेन । फलतः उनलाई राणाहरूले देशनिकाला गरेपछि उनी भारतको बङ्लोरमा गई बसे र त्यहीँ उनको मृत्यु भयो । यसरी नेपाली पत्रकारिताको इतिहास शुरू भएको हो । आज विभिन्न मुलुकमा छरिएर रहेको नेपाली पत्रकारिता बेलायतमा पनि सुन्दर बन्दै गएको छ । राजदूतावासका माध्यमद्वारा नेपाली साहित्य र पत्रकारिताले सम्मान र सहयोग प्राप्त गर्दै आएको छ ।

बेलायतमा विभिन्न पत्रकार बस्दै आउनुभएको छ । उहाँहरूले अनलाइन र छापामाध्यम गरी दुबै प्रकारको पत्रकारिता अँगाल्दै आउनुभएको छ । जसमा नेपाली स्रष्टा र उहाँका सिर्जना प्रकाशित छन् । यसरी बेलायतमा नेपाली पत्रकारिताले नेपाली साहित्यको सेवा गर्दै आएको छ ।

## साहित्य र समाज

*आयो कम्पन जीर्ण यो हृदयमा भूकम्पको चाल त्यो !*
*राजा तत्क्षणमै गएर नभमा अन्याय बेहाल भो !*
*भो एकै क्षणको महामिलन त्यो, छन् सम्झना केवल !*
*मेरो जीवन नासियो नियतिले खाली भयो देवल !*
*यो सानो शिशुको मुहार कसरी होला यहाँ उज्ज्वल ?*
*बिसूँ झैं किन लाग्छ? दग्ध मनमा उर्लिन्छ कालो जल !*
*बस्दै छिन् धरणी गुमेर नभको लालित्य नौलो कला !*
*छोइन्नन् अब यी भएर अबला चित्कारकी अप्सरा ।।*

यसरी बेलायतमा नेपाली पत्रकारिता भाषा, साहित्य र पत्रकारिताको त्रिवेणीमा अगाडि बढेको देखिन्छ ।

## बेलायतमा नेपाली साहित्य र संस्कृति

बेलायतको साहित्य मूलतः डायस्पोरिक चेतनामा आधारित छ । धेरै लामो समयसम्म विदेशमा बसेर स्वदेश र स्वसंस्कृतिको सम्झना गरी लेखिएको साहित्यलाई

डायस्पोरिक साहित्य भनिन्छ । यहाँ गोर्खा सैनिकमा खास गरी जनजाति समुदाय बढी छन् भने न्यून संख्यामा अन्य जाति छन् । तसर्थ सबै जाति र संस्कृतिलाई यहाँ समान प्रकारको माया गरिन्छ ।

आफ्नो मौलिक संस्कृति र परम्परामा गौरव गर्दै नेपालीपन झल्काउने नेपालीहरू यहाँ मेला पर्वमा रमाएको देखिन्छ । यसको मूल केन्द्रविन्दु नेपाली भाषा नै हो ।

यहाँ साहित्य विकास परिषद् यूके, नेपाली साहित्यसमाज, अन्तर्राष्ट्रिय नेपाली वाङ्मयप्रतिष्ठान, विश्व नेपाली साहित्य प्रज्ञाप्रतिष्ठान, नेपाल मुक्तक प्रतिष्ठान, विश्व नेपाली साहित्य महासंघ, साहित्यचौतारी यूके, साहित्य सङ्गम यूके, समकालीन साहित्य प्रतिष्ठान, एनआरएन भाषा साहित्य विभाग, साहित्य सँगालो, प्रवासी नेपाली साहित्यसमाज, नेपाली प्रतिभा प्रतिष्ठान, प्रतिभा नक्षत्र आदिजस्ता १५० भन्दा बढी साहित्यिक संघसंस्थाहरू बेलायतमा नेपाली भाषासाहित्यको उत्थानका लागि क्रियाशील छन् ।

यी सबैको चिनारी यहाँ सम्भव भएन परन्तु एनआरएन यूके लाई सबैको छाता संस्था मानिन्छ । बेलायतवासी नेपालीलाई प्रवासको अनुभूति हुँदैन किनभने यहाँ दशैँ, तिहार, तीजपञ्चमी, ल्होसार, बौद्धगुम्बा, मन्दिर, नेपाली रेडियो, टेलिभिजन, पत्रपत्रिका, अनलाइनपोर्टल आदि सबैको सुविधा छ । त्यसै प्रकारले यहाँ नेपाली भाषाकक्षा पनि सञ्चालित छन् । म आफू पनि विगत आठ वर्षदेखि नेपाली भाषाशिक्षकका रूपमा यहाँ सेवारत छु । बेलायतको नयाँ पुस्तालाई भाषाविकासमा प्रेरित गर्नका लागि मेरो अभियान फलदायी हुनेछ भन्ने कुरामा म पूर्ण विश्वस्त छु ।

**निष्कर्ष**

समग्रमा भन्नुपर्दा नेपाली भाषा, पत्रकारिता, साहित्य र समाजको सन्तुलित समुन्नति बेलायतमा यद्यपि दिनप्रतिदिन बढ्दै गएको भए पनि नयाँ पुस्ताका लागि भने चुनौतीपूर्ण नै छ । यसको खास कारण नेपालीको संख्या बेलायतमा बढ्दै जानु हो । तसर्थ बेलायतमा राजदूतावासले समयमै यो समस्याको उचित व्यवस्थापन गर्न जरूरी छ । ●

*(लेखक शाखाकी सचिव हुन्।)*

# पत्रकारितामा ब्रेकिङ न्यूज र विश्वसनीयता



विपिन निरौला

पत्रकारितामा 'ब्रेकिङ न्यूज'को निकै ठूलो महत्व हुन्छ । सबैभन्दा पहिले कसले समाचार प्रकाशन वा प्रशारण गर्ने भन्ने प्रतिस्पर्धा जस्तो नै हुन्छ । मलाई धेरै साथीहरूले खाली किन हल्याण्ड (नेदरल्याण्ड्स)को बारेमा लेख्नुहुन्छ भनेर सोध्नुहुन्छ तर हल्याण्डमा पत्रकारिता तालिमका क्रममा सिकेका र घटेका घटना मेरो जीवनकालमै अविस्मरणीय र उपयोगी छन् । त्यस्तै एउटा घटना मा यहाँ प्रस्तुत गर्न चाहन्छु । सन् २००२ मा रेडियो नेदरल्याण्ड्स ट्रेनिङ सेन्टरमा पत्रकारिता तालिमका क्रममा रहँदा हिल्भरसमस्थित नेदरल्याण्ड्सको राष्ट्रिय टेलिभिजन प्रशारण केन्द्रमा देशका प्रमुख प्रतिपक्षी दलका नेतालाई एक अन्तर्वार्ता दिएर बाहिर निस्केर गाडी चढ्ने वेला गोली प्रहार गरेर हत्या गरियो । नेदरल्याण्ड्सको राष्ट्रिय टेलिभिजनको प्रांगणमा भएको उक्त घटनाको बारेमा पहिलो समाचार अर्थात् ब्रेकिङ न्यूज भने बीबीसीले प्रशारण गरेको थियो । बीबीसी ब्रेकिङ न्यूजमा मात्र अग्रणी छैन कि समाचारको विश्वसनीयतामा पनि त्यत्तिकै सुपरिचित छ ।

त्यही बीबीसी अर्थात् ब्रिटिश ब्रोडकास्टिङ कर्पोरेशन भएको देशमा रहेका हामी नेपाली पत्रकारले सिक्नुपर्ने कुरा धेरै छन् । त्यसो त बेलायत नेपालको सबैभन्दा पुरानो कूटनीतिक सम्बन्ध भएको देश हो । करिब दुई सय वर्षभन्दा लामो समयदेखि कूटनीतिक सम्बन्ध भएको देश बेलायतमा नेपाली पत्रकारिता विश्वप्रसिद्ध बीबीसी रेडियोको नेपाली सेवासँगै फस्टाएको भन्दा अतिशयोक्ति हुँदैन तर बीबीसीले त्यस बखत नेपालबाट आएका देशका उच्च पदस्थ व्यक्तिहरूसँग अन्तर्वार्ता लगायतमा सीमित थियो । बेलायतमा नेपाली डायोस्पोराको वृद्धिसँगै नेपाली समाजका गतिविधिलाई समाचारको रूपमा प्रस्तुत गर्न भने विस्तारै अन्य माध्यमका पत्रकारिताहरूको उदय भएको भन्नुपर्ने हुन्छ ।

त्यसो त नेपालभन्दा बाहिर नेपाली समाजको हित र संरक्षण अनि नेपाली भाषा, कला, संस्कृतिको जगेर्नाका लागि यसले महत्वपूर्ण भूमिका निर्वाह गरेको पनि छ । पछिल्लो परिस्थितिमा प्रविधिले पत्रकारितालाई सहजतासँगै चुनौती पनि थपिदिएको छ । सामाजिक सञ्जालहरू नागरिक पत्रकारिताको रूपमा उदाउँदै गर्दा प्रवासमा पत्रकारिताले आफ्नो अस्तित्वका लागि मर्यादित भएर अगाडि बढ्नुपर्ने वेला आएको छ । नेपाली समाजको हकहित र एकताका लागि कलम चलाउने र सम्बन्धित मुलुकको कानुन र परिधिभित्र रहेर पत्रकारिता नगरे प्रवासी पत्रकारिताले अबका दिनमा थुप्रै चुनौती समेत व्होर्नुपर्ने हुन्छ ।

बेलायतमा नेपाली पत्रकारिता र पत्रकारहरूको संख्या बढेसँगै नेपालसँग सम्बन्ध कायम राख्ने विभिन्न संघसंस्थाको गठनसँगै नेपाल पत्रकार महासंघ बेलायत शाखाको गठन करिब दश वर्षअघि भएको हो । एकजना संस्थापक सदस्यको रूपमा दशौं वार्षिकोत्सव मनाउँदा अत्यन्त हर्षित हुनु स्वभाविक हो । यस क्रममा छापा (प्रिन्ट), रेडियो, टेलिभिजन र हाल अनलाइन पत्रकारिता गरिरहँदा सिक्नुपर्ने कुरा धेरै छन् । एउटा संवाददाता वा रिपोर्टरका रूपमा हिजोका दिनमा कार्यरत रहँदा र विगत एकवर्षदेखि आफैं प्रकाशक वा भनौं सञ्चालकका रूपमा कार्यरत रहँदाका आनै चुनौती र अवसर छन् । अवसरका विषयमा अर्कोपटक चर्चा गरौला । यद्यपि वेलाबखत समाचारका विषयलाई लिएर आइपर्ने चुनौतीलाई सामना गर्न र पत्रकारहरूको व्यावसायिक हक, हित र संरक्षणका लागि भने महासंघ एकताबद्ध भएर अघि बढ्नुपर्ने अहिलेको अपरिहार्य आवश्यकता हो ।

*(लेखक शाखाका संरक्षक हुन्।)*

# अहँ ! रहर हुँदै होइन



कमला रसाइली

> मेरो आत्मसन्तुष्टि, मेरो पहिचान, अझ भनौँ मलाई म बनाउने नै पत्रकारिता थियो। आज त्यही पत्रकारिता पेशालाई थाती राखेर बेलायत हान्निएँ।

**जब** मैले अन्तिम निर्णय लिएँ, एक मनले भन्दै थियो कतै मैले ठूलै गल्ती पो गरेँ कि ? अर्को मनले फेरि भन्थ्यो हैन यो नै मेरो भविष्यका लागि सही निर्णय हो । जे होस्, सही या गलत त्यो समयले नै बताउला तर मेरा लागि यो निर्णय गर्नु रहर भने हुँदै होइन । अहँ रहर हुँदै हैन ।

१५ दिने आधारभूत तालिमपश्चात् पत्रकारिताप्रति बढेको मेरो झुकावलाई मैले पेशागत रूपमै अगाडि बढाएँ । करिब डेढ दशक पहिले जोडिएको पत्रकारितासँगको मेरो साइनो सायदै टुट्ला । यद्यपि केही समयलाई दूरी भने अवश्य बढेकै हो ।

रामेछापको पहिलो रेडियो (हजुरको रेडियो १०२.१ मेगाहर्ज) हुँदै रेडियो नेपाल र नेपाल टेलिभिजनसम्मको यात्रा सहज भने पक्कै थिएन । विभिन्न किसिमका आरोहअवरोह पार गर्दै सरकारी सञ्चारमाध्यमसम्मको मेरो यात्रालाई चटक्कै बिट मार्ने निधो गर्नु पनि मेरा लागि उत्तिकै मुस्किल थियो । त्यसमाथि मेरा लागि पत्रकारिता, पेशा मात्रै नभएर मेरो सबै थोक थियो । मेरो आत्मसन्तुष्टि, मेरो पहिचान, अझ भनौँ मलाई म बनाउने नै पत्रकारिता थियो । आज त्यही पत्रकारिता पेशालाई थाती राखेर बेलायत हान्निएँ ।

**बेलायत यात्रा रहर या बाध्यता ?**

विश्वमै मानवअधिकारको जननी भनेर चिनिएको देश बेलायत आउनु धेरै नेपालीका लागि रहर नै हो । कोही भ्रमणका लागि, कोही निश्चित उद्देश्य प्राप्तिका लागि त कोही भविष्यका लागि आउन चाहन्छन् । त्यही भविष्य बनाउन चाहनेहरूकै हुलमुलमा म पनि हुत्तिएर आएँ । यो देशमा आउन सहज हैन र त्यति गाह्रो पनि रहेनछ ।

केही समयका लागि पासपोर्टमा लागेको भिसाले भविष्य सुनिश्चित गर्न आएँ भन्न त पक्कै नमिल्ला तर भविष्य निर्माणको आधार बनाउन सहज होला कि भन्ने अभिलाषा लिएर आएको भने पक्कै हो ।

नेपालको पत्रकारिता क्षेत्र नेपाली एक उखान टुक्का (देखाउने दाँत एउटा, चपाउने अर्को) जस्तै लाग्छ । पत्रकार भन्नेबित्तिकै उसमा रवाफ, रहनसहन र देखावटी व्यक्तित्व हावी हुनैपर्ने । त्यसमा पनि टेलिभिजन पत्रकारितामा यो बढी देखिन्छ । यस पेशाबाट हुने मासिक आम्दानी जति हुन्छ, देखावटी रवाफकै लागि त्यही अनुपातमा खर्च हुन्छ । त्यसमाथि दिन दुई गुणा, रात चौगुणाका दरले बढ्ने महँगीले जीवन गुजारा गर्न निकै मुस्किल बनाएको छ । आफू मात्रै नभएर आफ्नो परिवारप्रतिको जिम्मेवारी र बजारको बढ्दो महँगीले गर्दा म जस्ता अधिकांश पत्रकारले पेशाको विकल्प खोजेको देखेकी छु र मैले पनि अन्ततः विकल्प नै रोजेकी हुँ ।

**नेपाली मिडिया र श्रमजीवी पत्रकार**

नेपालमा छ्यापछ्याप्ती उम्रिएका सञ्चारगृह, त्यो पनि आनै पक्षपोषण र प्रचारप्रसारका लागि । यस्ता सञ्चारगृहले पत्रकारलाई दिने पारिश्रमिकको कुरै छाडौँ । नेपालकै नामी र स्थापित ठूला सञ्चारगृहले समेत उचित पारिश्रमिक त परको कुरा, तोकिएको पारिश्रमिक समेत महिनौँसम्म दिएका छैनन् । पारिश्रमिक नदिएकै कारण श्रमजीवी पत्रकारले बारम्बार आन्दोलन गर्नुपरेका समाचर हामीले लेख्दै आएका छौँ ।

सरकारी कर्मचारीको तलब वृद्धि हुन्छ । तलब वृद्धि भएसँगै महँगी त्यसको दोब्बर पुग्छ । जसको मारमा आमनागरिक र आम सञ्चार क्षेत्रमा काम गर्ने हामीजस्ता श्रमजीवी पत्रकार नै पर्छौं । पत्रकारको न तलब बढ्छ, नत तोकिएको पारिश्रमिक नै समयमा पाइन्छ ।

पत्रकारका लागि तोकिएको न्यूनतम पारिश्रमिक समेत सरकारी सञ्चारगृह बाहेक बिरलै सञ्चारगृहले मात्रै लागू गरेका छन् । न्यूनतमबाट तलब शुरूवात हुने भए पनि सरकारी सञ्चारगृहले समेत न्यूनतमबाट थोरै पनि बढी तलब दिएको पाइँदैन ।

एक त श्रमजीवी पत्रकारका लागि तोकिएको पारिश्रमिक समेत पर्याप्त छैन । हाल पत्रकारको न्यूनतम पारिश्रमिक २४ हजार

३७५ रहेको छ भने गत फागुनमा न्यूनतम पारिश्रमिक निर्धारण समितिले पत्रकारहरूको न्यूनतम पारिश्रमिक तीस हजार ४६८ पुऱ्याउन सरकारलाई सिफारिस गरेको छ । जब कि हालै सरकारले सार्वजनिक गरेको आर्थिक वर्ष २०७९ ।८० को बजेटमा सरकारी कर्मचारीको तलब १५ प्रतिशत वृद्धि भएसँगै आगामी साउनदेखि सबैभन्दा कम तलब खरिदारको ३२ हजार ९०२ रूपैयाँ हुनेछ ।

यसरी चौथो तहका सरकारी कर्मचारी र स्नातक/स्नातकोत्तर गरेर पत्रकारिता पेशामा होमिएका पत्रकारहरूको पारिश्रमिकमा देखिएको यो अन्तरले पनि पत्रकारहरूलाई विकल्प खोज्न बाध्य बनाउँछ ।

**मेले सुनेको र देखेको बेलायत**

वि.सं. २०६६ बाट शुरू भएको मेरो पत्रकारिताको यात्रा रेडियो नेपालमा पुगेर केही समयका लागि स्थगित जस्तै भएको छ । वि.स. २०७१ जेठमा रिपोर्टरको रूपमा रेडियो नेपालमा प्रवेश गरेँ । रिपोर्टर, समाचारवाचक/सम्पादक र कार्यक्रम प्रस्तोताका रूपमा रेडियो नेपालमा ७ वर्ष बिताएँ । रेडियो नेपालमै कार्यरत रहँदा नेपाल टेलिभिजनमा समेत कार्यक्रम प्रस्तोताका रूपमा काम गर्ने अवसर पाएँ । रेडियो, टेलिभिजन र अनलाइन, तीनै विधाको पत्रकारितासँग सामीप्य बढ्यो । यो अवधिमा मैले धेरै सिक्ने मौका पाएँ र धेरै कुरा कमाएँ । जुन मेरो जीवनभरको कमाइ हो । यी सबै कुरालाई छेउ लगाएर २६ जनवरी २०२२ मा अर्थात् २०७८ माघ १२ मा बेलायतमा पाइला टेकेँ । आज यहाँ नयाँ सिराबाट संघर्ष शुरू गरेकी छु ।

मैले सुनेको बेलायत र मैले देखेको बेलायतमा यो पाँच महिनाको अवधिमा धेरै फरक पाएकी छु । हुनत बेलायतको एउटा सानो कुनामा बसेर सिंगो बेलायतबारे बुझ्न त सम्भव छैन, यद्यपि यहाँको व्यवस्था र प्रणालीले नेपाल कहिले यस्तो बन्ला भन्ने प्रश्न भने उब्जाउँदो रहेछ ।

मैले सुनेको बेलायत, जहाँ २४ घण्टा काम गर्नुपर्छ । खाने सुत्ने समय हुँदैन । मेसिनको जीवन बिताउनु पर्छ । आफ्नो लागि समय हुँदैन । काम गर्न कठिन हुन्छ, जस्ता यावत् कुरा छन्, जुन यहाँ व्यक्त गरेर सम्भव छैन तर मैले देखेको बेलायत बिल्कुल फरक छ ।

यहाँ हरेक कुरा व्यवस्था अनुसार चलेको पाएँ । सबैभन्दा पहिलो कुरा यहाँ श्रमिकलाई सम्मान र श्रमको मूल्य छ । जस्तोसुकै काम किन नहोस् । काम गर्ने व्यक्तिप्रति सम्मानजनक व्यवहार हुन्छ ।

यहाँको सुविधा सम्पन्न भौतिक पूर्वाधार, समयमा चल्ने सार्वजनिक सवारी, गुणस्तरीय सूचना प्रविधि, नियमको पालना, स्वतन्त्रता, वृद्धवृद्धा, अपांगता भएका र बालबालिकाप्रति राज्यले निर्वाह गर्ने भूमिका साँच्चिकै प्रशंसनीय लाग्यो । यस देशमा मानवअधिकार पहिलो प्राथमिकता हो । यहाँ जातजातिबीच विभेद छैन । उँचो निचो व्यवहार छैन । समान अवसर र समान सेवा सुविधा छ । जुन नेपालमा पाउन मुस्किल छ ।

हो यहाँ जोकोही व्यस्त होलान्, तैपनि व्यवस्थित जीवनशैली छ । ●

